● वर्ष ९ ● अङ्क १० ● ज्येष्ठ २०६५ ● पूर्णाङ्क १०६

## सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–४,
  फोन: ०६४-४२९३१८
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर-९, शेराबजार
- **भक्तपुर**, सूर्यविनायक,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-५६०१६९
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## रोट महोत्सव विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-


रोट ४
रोट महोत्सव र यसको अनिवार्यता ७
गोरख गुफा १४
गोरक्ष स्तवन १८
गुरु पादुका पूजन २०
श्री गोरख महापुराण २८
गुरु र शिष्य ३०
अनुभव अनुभूति ३३
हस्तरेखा ३४
कुमार षष्ठी ३६
आयुर्वेद ३८
सूक्ष्म शरीरको यात्रा ४१
आश्रम गतिविधि ४४
अवतरण यात्रा ४६
गुरु गीता ४८
श्री निखिलेश्वर शतकम् ४९
योग ५०
दिव्य साधनात्मक सूत्रहरू ५१
फेरि आयो महोत्सव ५२

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र सोमबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक वृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं:** २०७१२००, २१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), Email: gonisa@ntc.net.np

# आफ्नै कुरा

समय र परिस्थितिलाई हेर्दा हाल नेपालमा केही अनुकूल, शान्तिपूर्ण वातावरणको निर्माण हुन लागेको भान हुन्छ । यतिबेला देश इतिहासमै पहिलोपटक नयाँ शैलीले अगाडि बढ्न लागेको पाइन्छ । देशलाई नयाँ शैलीले, नयाँ सोच र चिन्तनले अगाडि बढाउन नयाँ संविधान लेख्न राजनैतिक पार्टीहरूले आफ्ना प्रतिनिधि पठाएका छन् । देशको सत्ता परिवर्तन हुने नयाँ मोडमा अगाडि बढेको छ । आम नेपालीहरू परिवर्तनको आशामुखी छन्, सबैले केही परिवर्तन हुने, देशले नयाँ मोड लिन सक्ने कुरामा आशान्वित छन् । भविष्यमा के हुन्छ, त्यो त हेर्न बाँकी नै छ । हुन त परिवर्तन संसारको नियम हो, परिवर्तन स्वभाविक पनि हो ।  आध्यात्मिक समाजको निर्माण गर्ने हाम्रो लक्ष्य पनि यस्तै-यस्तै परिवर्तनसँगै वातावरण बन्नेछ । क्रमिकरूपले समाज रूपान्तरणको दिशामा उन्मुख हुँदै जानेछ भन्ने चाहना रहँदै आएको छ । जसको तयारी पनि प्रत्यक्ष अप्रत्यक्षरूपमा भइरहेको छ ।

यस महिना सिद्धाश्रम शक्ति केन्द्रको लागि विशेष महिना हो । यस महिना देशमै एउटा भव्य एवं दिव्य पर्वको रूपमा रोट महोत्सवलाई यस संस्थाले सम्पन्न गर्न लागिरहेको छ । श्री श्री महायोगी गुरु गोरखनाथ प्रथम पटक प्रकट हुनुभएको गोरखास्थित गोरख गुफामा यस महोत्सव सम्पन्न हुँदैछ । श्री श्री महायोगी गुरु गोरखनाथ वैशाखी पूर्णिमामा यस गुफाबाट प्रथमपटक यस धरामा प्रकट हुनुभएको हो । यस्तो गर्वको विषय पनि धेरै नेपालीलाई थाहा नहुन सक्छ । सरकारी तवरबाट यस्ता दिव्य गुरुहरूको कुनै वास्ता छैन, कुनै प्रचार-प्रसार छैन । नेपालकै लागि गर्वको विषयको बारेमा नेपालीलाई नै थाहा छैन, कस्तो दुर्भाग्यको कुरा ! भारतमा कुनै उपयुक्त प्रमाण, कुनै आधार नै नहुँदा त गुरु गोरखनाथ भारतमा प्रकट हुनु भएको प्रचार गरिन्छ तर नेपालमा भने कुनै सरोकार नै छैन । जे होस्, सिद्धाश्रम शक्ति केन्द्रले आफ्नै तर्फबाट भए पनि सत्य-तथ्य कुराहरू समाजसमक्ष ल्याइरहेको छ, आफ्नो तर्फबाट सार्वजनिक पनि गरिरहेको छ । आशा गरौं, समय सँगै सबैले वास्तविकता बुझ्ने छन् र स्वभाविकरूपमा गर्व गर्ने छन् ।

सिद्धाश्रम शक्ति केन्द्रले इतिहासमा नै नौलो र दिव्य कार्यक्रम 'रोट महोत्सव'को ऐतिहासिक थालनी गरी यसपालि पाँचौं रोट महोत्सव भव्यरूपमा सम्पन्न गर्ने तयारीमा जुटेको छ । जनताको तर्फबाट गुरु चरणमा सवालाख रोट अर्पण गर्ने कार्यको नेतृत्व गरेर यस संस्थाले उल्लेखनीय कार्य गरेको छ, सबैलाई गुरु गोरखनाथको कृपा, आशीर्वाद प्राप्त गर्ने दिव्य अवसर जुटाइदिएको छ । यसैले, जो कोही पनि आएर यस महोत्सवमा समावेश हुन पाउने यस दिव्य अवसरको सदुपयोग गरौं, गुरु गोरख कृपा, आशीर्वाद प्राप्त गरौं ।

यसपालि हामीले यस अंकलाई 'रोट महोत्सव' विशेषका रूपमा निकालेका छौं । रोटसम्बन्धी विविध जानकारी दिने हाम्रो कोशिस रहेको छ । तैपनि हामीले सोचे जति सामग्रीहरू समावेश गर्न सकेनौं । जे-जति सामग्रीहरू छन्, त्यसलाई पूर्णरूपले अध्ययन गरी ग्रहण गर्नुहुनेछ र रोटसम्बन्धी विविध जानकारीहरू पाउनुहुनेछ भन्ने आशा लिएका छौं । अन्तमा, यस अंकको प्रकाशनमा भए गरेका कमी, कमजोरी, न्यूनताको लागि परमपूज्य सद्गुरुदेवहरूसमक्ष र यहाँहरूसमक्ष क्षमा माग्दै आवश्यक सल्लाह, सुझाव र प्रतिक्रियाको आशा गर्दछौं । अस्तु ।

# रोट

चामलको पीठो, गहुँको पीठो अथवा जौको पीठोमा विभिन्न मसलाहरू मिलाएर बनाइएको विशेष परिकारलाई रोट भनेर बुझिन्छ । चामल, गहुँ, जौलाई शुद्ध मानी यी वस्तुहरूको पीठोमा करिब ३२ थरिका सुकेका फलादि मसलाहरू मिसाएर रोट पकाउने गरिन्छ । हामीले घर-परिवारमा पनि चामल, गहुँको पीठोबाट रोटी पकाएर त खाइरहेकै छौँ । मानिसले खानेलाई रोटी भनियो भने भगवान्लाई चढाउनेलाई 'रोट' भन्ने गरेको पाइन्छ । रोटमा विभिन्न किसिमका मसलाहरू नरिवल, काजु, किसमिस, अलैँची, सुकुमेल, ल्वाङ, छोकडा, मरिच, दालचिनी, खुदो, मह, घिउ, चिनी, पानी आदि विभिन्न थरिका वस्तुहरू मिसाइन्छ र विशेष विधिद्वारा पकाइन्छ ।

सामान्यतया रोट दुई किसिमले पकाएर चढाउने गरिन्छ । एक किसिमको रोटलाई गोलाकार बनाई पातमा राखी आगोमा अर्थात् भुङ्ग्रोमा पुरिन्छ र करिब १ घण्टा जतिमा यो रोट तातो खरानी एवं आगोको भुङ्ग्रोले सेकिएर पाक्दछ । यसरी भुङ्ग्रोमा राखेर पकाइने भएकोले बोलीचालीको भाषामा यसलाई 'भुङ्ग्रे रोट' भन्ने गरिन्छ । यो रोट विभिन्न आकारको हुने गर्दछ । करिब दस इन्चदेखि माथि निकै ठूला-ठूला रोट पनि पकाउने गरेको पाइन्छ । अलि मोटो नै हुने यस प्रकारको रोट धेरै समयसम्म राख्दा बिग्रने गर्दछ ।

अर्को रोटलाई 'ताई रोट' भन्ने गरेको पाइन्छ र ताई रोटलाई ताईमा राखी घिउमा तारेर पकाइन्छ । रोट पकाउनका लागि तयार पारिएको पीठोमा विभिन्न मसलाहरू राखी मुछिन्छ र विशेष आकृति (पृथ्वीको आकार) मा गोलाकार बनाइन्छ र बीचमा नाभि (ॐ कार) बनाइन्छ । यसरी विशेष विधिका साथ रोट बनाई बीचमा बनाइएको नाभिलाई 'शिवलिङ्ग' पनि भनिन्छ । यस्तो नाभि भुङ्ग्रे रोटमा पनि बनाउने चलन छ जसलाई 'सुमेरु' पनि भनिन्छ ।

गोरख गुफाका पूजारी नाथहरूले रोट बनाउँदा पनि विशेष मन्त्रको उच्चारण गर्नुपर्ने हुन्छ र गुरु गोरखनाथलाई

सवालाख रोट भन्नाले एक लाख पच्चीस हजारको सङ्ख्यालाई बुझिन्छ । गोरख गुफामा जे गरिन्छ, त्यो सय गुणा हुने भएकोले सवालाख चढाउँदा करोडको सङ्ख्या मान्य हुने हुँदा यस रोट अर्पण कार्यलाई महोत्सवको रूपमा लिने गरिन्छ । गुरु गोरखनाथले जुनसुकै चीज पनि करोडको सङ्ख्यामा स्वीकार्नु हुने भएकोले पनि यस सवालाख रोटको विशेष महत्त्व रहँदै आएको छ । त्यसैले, तपाइँ पनि यस कार्यमा अवश्य सहभागी हुनुहोला ।
एउटा रोट अर्पण गर्दा एउटा पृथ्वी दान गरे बराबरको पुण्य मिल्दछ भनिन्छ। त्यस्तै जसले यस्तो रोटलाई ग्रहण गर्ने सौभाग्य प्राप्त गर्दछ, ऊ धन्य बन्दछ । रोटलाई 'महाप्रसाद' भनिन्छ । रोट महाप्रसाद प्राप्त गर्नेहरूलाई गोरख कृपा प्राप्त हुन्छ । आफ्ना कर्म, संस्कारका विविध दोषहरू हट्ने विश्वास गरिन्छ। यसरी रोट मानव जीवनको कल्याणको माध्यम हो, गुरुकृपा, आशीर्वादको सरल माध्यम हो ।
जय गुरुदेव !

रोट चढाउँदा पनि विशेष रोट पूजा गरी मन्त्रसहित चक्कुले रोटको बीचको भाग काटी गुरु गोरखनाथको चरणमा चढाउने गरिन्छ ।

यसरी विभिन्न भक्तहरूले आफूले ल्याएका पीठो, घिउ, मसला आदि त्यहाँका पूजारीलाई दिन्छन् र पूजारीले सहयोगीको माध्यमबाट रोट पकाई गुफामा गुरु गोरखनाथको चरणमा चढाउने गर्दछन् अनि फेरि प्रसादको रूपमा भक्तजनलाई दिने गर्दछन्। व्यक्तिहरूले आफ्नो गच्छेअनुसार एवं इच्छाअनुसार पनि रोट चढाउने गरेको पाइन्छ । कृषकहरूले आफ्नो अन्न-बाली भित्र्याएपछि पहिलो अन्न गुरु गोरखनाथलाई रोट बनाई चढाउन ल्याउने गरेको पाइन्छ ।

**सवालाख रोट अर्पण–**

गुरु गोरखनाथलाई खुशी बनाउन सवालाख रोट चढाउने प्रचलन रहँदै आएको पाइन्छ। कहिलेदेखि सवालाख रोट चढाउने प्रचलन बस्यो र यसको शुरुआत कसरी भयो भन्ने सम्बन्धमा यथेष्ट शिलालेखको अभाव, ऐतिहासिक प्रमाणको कमी आदि विविध कारणले गर्दा सही तिथि, मिति र व्यक्ति वा समूहको नाम पाइँदैन ।

गुरु गोरखनाथको प्रिय वस्तु रोट भएको र उहाँलाई छिटो खुशी बनाउन रोटको प्रयोग गरिने भएकोले रोट अर्पण कार्यक्रम परापूर्वकालदेखि नै शुरुआत भएको मान्न सकिन्छ । गुरु गोरखनाथका थुप्रै शिष्यहरू राजा, महाराजाहरू हुनुले पनि रोट चढाउने प्रथाको थालनी प्राचीन नै भएको मान्न सकिन्छ । पृथ्वीनारायण शाहको पालामा पनि सैनिकहरू रोट खाएर युद्ध लड्न जाने गरेका प्रसङ्गहरूको उल्लेख पाइन्छ । यसैले, गुरु गोरखनाथको आशीर्वाद प्राप्त द्रव्य शाह हुन् वा त्यसपछिका राजाहरू अथवा पृथ्वीनारायण शाहलगायतका अन्य राजाहरू हुन्, उनीहरूले सवालाख रोट चढाए वा चढाएनन्, त्यो यकीनका साथ भन्न सकिँदैन । तैपनि बेला-बखत ठूलो परिमाणमा रोट चढेको हुन सक्ने अनुमान भने लगाउन सकिन्छ ।

हालको इतिहास हेर्दा राजा त्रिभुवनले वि.सं. १९७२ र १९९६ मा रोट चढाएको पाइन्छ। त्यस्तै राजा महेन्द्रले २०१६ सालमा, राजा वीरेन्द्रले २०३५ र २०५२ सालमा चढाएको देखिन्छ भने राजा ज्ञानेन्द्रले पनि २०६१ माघमा रोट चढाएको पाइन्छ ।

राजाहरूमा मात्रै सीमित रहेको सवालाख रोट अर्पणको कार्यलाई २०६१ सालको वैशाखी पूर्णिमाको दिनदेखि ११ दिनसम्म सिद्धाश्रम शक्ति केन्द्रले सवालाख रोट अर्पण कार्यक्रम भव्यरूपमा संचालन गरी भक्तजनको तर्फबाट, शिष्य एवं साधकहरूको तर्फबाट र अन्य सामान्य व्यक्तिहरूको समेत सहभागिता गराई सवालाखको सङ्ख्यामा रोट

चढाई एउटा स्वर्णिम इतिहासको शुरुआत गरेको थियो । सारा समाजकै नेतृत्व गरेर सिद्धाश्रम शक्ति केन्द्रले आयोजना गर्ने गरेको यो कार्यक्रम रोट महोत्सवको रूपमा एउटा विशेष पर्व नै बनेको छ । ११ दिनसम्म रोट पकाउने, चढाउने, साथसाथै पूजा, होम, स्तुति, वन्दना, स्तोत्र-पाठ, भजन-कीर्तन, नृत्य आदि धूमधामका साथ गर्दै भण्डारा लगाउने गरिएकोले यस कार्यक्रमको रौनक नै भिन्दै हुने गर्दछ । जो कोही व्यक्ति पनि आएर समावेश हुन सक्ने यो दिव्य रोट महोत्सव आफैमा एउटा अद्वितीय कार्यको ज्वलन्त उदाहरण बनेको पाइन्छ ।

सवालाख रोट अर्पण कार्यक्रममा सावर संरचना शक्ति केन्द्रको तर्फबाट सूक्ष्म उपस्थिति समेत भएको हुन्छ । सावर संरचना शक्ति केन्द्रका दिव्य नाथ योगीहरूको सूक्ष्म समूह साणोपाई, बत्रिचिड, जाटिटा आदि आई दिव्य रोट महोत्सव कार्य सम्पन्न गर्ने गरेको पाइन्छ ।

रोट अर्पणको कार्यक्रबाट गुरु गोरखनाथ खुशी हुनुभएको अनुमान गर्न सकिन्छ । हत्या, हिंसा र कहालीलाग्दो डर, त्रासको स्थितिबाट प्रत्येक वर्षको रोट अर्पणसँगै समाजमा परिवर्तन भई शान्तिको स्थिति आई देश राजनैतिक रूपान्तरणको दिशामा अग्रसर हुनु निश्चय नै सुखद कुरा हो । अरुले के इरादाले रोट चढाए, के के उद्देश्य राखे, पूरा भए भएनन्, त्यो उनीहरूको विषय हो तर सिद्धाश्रम शक्ति केन्द्रले पवित्र उद्देश्यले सारा समाजको कल्याणको लागि शान्ति र आनन्दको प्राप्तिको निमित्त गरेकोले होला, सिद्धाश्रम शक्ति केन्द्रले धेरै उपलब्धिहरू हासिल गरेको अनुभव हुन्छ । आशा गरौं, आगामी दिनमा हुने रोट महोत्सवबाट पक्कै पनि समाजमा आर्थिक, साँस्कृतिक, सामाजिक रूपान्तरण हुँदै आध्यात्मिक भावभूमिको निर्माण भई शान्ति, आनन्दको अनुभूति सारा समाजले प्राप्त गर्न सक्नेछ ।

सबैले गुरु गोरखनाथको कृपा, आशीर्वाद प्राप्त गर्न सकून् भन्नाको खातिर यस किसिमको विशाल कार्यक्रमको आयोजना गर्नु आफैमा सराहनीय कार्य हो । प्रत्येक व्यक्तिले आ-आफ्नो स्तरअनुसारको दान गर्न सक्ने, रोटमा आफ्नो तर्फबाट पनि केही मिसाउन पाउने प्रावधानले सबैलाई दिव्य अवसर प्राप्त भएको मान्न सकिन्छ । दान आफैमा दिव्य कर्म हो जसको माध्यमबाट आफ्ना कमी कमजोरी, कर्मदोष आदिलाई हटाउन सकिन्छ । दान आफैमा ठूलो पुण्य कार्य हो । सामान्य दान त सबैले गर्छन् । दिव्य कार्यमा, दिव्य गोरख गुफामा रोट चढाउनको लागि गरिने दान आफैमा उच्चकोटिको दान मानिन्छ ।

सिद्धाश्रम शक्ति केन्द्रले रोट अर्पण कार्यक्रमलाई 'रोट महोत्सव'को रूप दिएको छ । साथै ऐतिहासिक कार्यको थालनी गरी यसलाई निरन्तरता दिइरहेको छ । यसरी प्रत्येक वर्ष वैशाखी पूर्णिमादेखि शुरुआत गरी ११ दिनसम्म आयोजना गरिने यस दिव्य रोट महोत्सवमा जो कोहीले पनि भाग लिन सक्छन् र स्वेच्छाले दान गरी गोरख कृपा प्राप्त गर्न सक्छन् । त्यसैले, गोरख कृपा, आशीर्वादको लागि यस्ता दिव्य कार्यक्रममा तपाईंले पनि भाग लिन सक्नुहुनेछ साथै अरुलाई समेत प्रेरणा दिन सक्नुहुनेछ । जय गुरुदेव !

**सिद्धाश्रम शक्ति केन्द्र नेपालद्वारा आयोजित रोट महोत्सव**

प्रथम– २०६१ वैशाख २२ देखि ज्येष्ठ २ गतेसम्म

द्वितीय– २०६२ ज्येष्ठ ९ देखि ज्येष्ठ १९ गतेसम्म

तृतीय– २०६३ वैशाख ३० देखि ज्येष्ठ ९ गतेसम्म

चतुर्थ–२०६४ वैशाख १९ देखि वैशाख २९ गतेसम्म

पाँचौं– २०६५ ज्येष्ठ ७ गतेदेखि १७ गतेसम्म (आयोजना हुने)

# रोट महोत्सव र यसको अनिवार्यता

सिद्धाश्रम शक्ति केन्द्रले वैशाख पूर्णिमादेखिको एघार दिन सवालाख रोट अर्पण कार्यक्रम गरी मनाइरहेको पनि चार वर्ष पूरा भएर पाँचौं वर्ष टेकेको छ। २०६१ सालदेखि मनाउन थालिएको रोट महोत्सव कार्यक्रमले २०६५ सालसम्म आइपुग्दा धेरै व्यापकता पाइसकेको छ।

यो कार्यक्रम केवल सिद्धाश्रम शक्ति केन्द्रको मात्र कार्यक्रम होइन । यो त समस्त लोककै कार्यक्रम हो। समस्त लोक, समस्त समाज, देश र विश्वकै समुन्नति, शान्ति र प्रगतिको कामनाले ओतप्रोत कुनै पनि कार्यक्रम एउटा संस्थाको मात्रै हुनै सक्दैन । संस्थाले त यस कार्यक्रमको नेतृत्व गरेको मात्र हो। यस्तो कार्यक्रमलाई प्रचारप्रसारको माध्यमबाट जनजनमा पुऱ्याउने मात्रै संस्थाको काम हो। सिद्धाश्रम शक्ति केन्द्रले रोट महोत्सवको थालनी गर्दा यस कार्यक्रमबारे कमैलाई मात्र जानकारी थियो । शुरुको कार्यक्रम भव्य एवं दिव्य रूपमा सम्पन्न भएपछि त देशव्यापीरूपमा रोट कार्यक्रमको बारेमा चर्चा-परिचर्चा हुन थालिसकेको छ । सीमित व्यक्ति र व्यक्तित्वहरूका लागि मात्र सम्भव देखिने रोट कार्यक्रम अत्यन्तै खर्चिलो कार्यक्रम हो । कार्यक्रम लामो समयसम्म निरन्तर जारी रहने, विविध वस्तुहरूको मिश्रण गरी रोट तयार गर्नुपर्ने, धेरै मानिसहरू खट्नुपर्ने हुनाले रोट महोत्सवको कार्यक्रम सम्पन्न गर्ने साहस कसै-कसैको मात्र हुने गर्दछ। जसले साहस गर्दछ उसले धेरै भौतिक पूर्वाधार तयार गर्नुपर्ने हुन्छ। त्यसपछि मात्र रोट कार्यक्रम सम्पन्न हुन सक्छ। त्यसैले पनि इतिहासमा थोरै मात्र रोट कार्यक्रम सम्पन्न हुन सकेको तथ्यांक पाइन्छ।

सिद्धाश्रम शक्ति केन्द्रले लगातार चारपटक यस कार्यक्रमलाई सम्पन्न गरि सकेको छ भने यस महिनाको ७ गतेदेखि १७ गतेसम्म यो महोत्सव पाँचौंपटक सम्पन्न हुन गइरहेको छ। यसरी सिद्धाश्रम शक्ति केन्द्रले अटुटरूपमा यस कार्यक्रमलाई सम्पन्न गर्दै आइरहेको छ र भविष्यमा पनि सम्पन्न गर्दै जाने लक्ष्य राखेको छ।

ऐतिहासिक जिल्ला गोरखामा रहेको गोरख गुफामा रोट महोत्सव एघार दिनसम्म निरन्तर चल्दछ । वैशाख पूर्णिमाबाट शुभारम्भ हुने कार्यक्रममा बिहानैदेखि स्तवन पाठ, मन्त्रजप, ध्यान आदिका कार्यक्रमहरूलगायत पूजाका कार्यक्रमहरू

सम्पन्न हुन्छन् । पूजापश्चात् श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा रोट चढाइन्छ । एकातिर यी कार्यक्रमहरू सम्पन्न हुन्छन् भने अर्कोतिर भजन-कीर्तन, नृत्य पनि चलिरहेका हुन्छन् । पुन: अर्कै ठाउँमा प्रसादको व्यवस्था पनि भइरहेको हुन्छ । कतै-कतै विविध व्यवस्थापनका कार्यहरू भइरहेका हुन्छन् भने विभिन्न जिल्लाहरूबाट मानिसहरू रोट कार्यक्रममा सहभागी हुन गोरखामा आउने क्रम पनि दैनिकरूपमा जारी रहेको हुन्छ । सिद्धाश्रम शक्ति केन्द्रका साधक-साधिकाहरू यी सबैको व्यवस्थापनका लागि व्यग्र र सभक्ति लागिरहेका हुन्छन् ।

महोत्सवमा सिद्धाश्रम शक्ति केन्द्रका विभिन्न जिल्लामा रहेका सम्पर्क कार्यालय, प्रस्तावित सम्पर्क कार्यालय, आरती संचालन केन्द्रलगायत प्रचारप्रसार केन्द्रहरूबाट पनि साधक साधिकाहरू गोरखा जिल्ला ओइरिन्छन् । यति मात्र होइन, विभिन्न स्थानबाट महोत्सवमा सहभागी हुने मानिसहरूको भीड थेग्न गोरखा असमर्थजस्तै देखा पर्दछ। गोरखाका होटेल, आवास गृहहरू महोत्सव अवधिभरि साधक-साधिकाहरूले खचाखच भरिन्छन् भने पहेँला गुरु चादर ओढेका साधक-साधिकाहरूको चहल-पहलले गोरखा जिल्ला पनि महोत्सवमय भएको भान पर्दछ ।

रोट महोत्सव विशाल र वृहत् हुन्छ । हुन त गुरु गोरखनाथका अन्य मठ, मन्दिरहरूमा पनि विशेष अवसर र बार पारेर रोट चढाइन्छ। तर ती सीमित मात्रामा मात्र चढाइने हुन्छन् । संस्थाबाट आयोजना हुने रोट महोत्सवमा भुङ्ग्रे र ताई रोट गरी दैनिक ३०-४० हजारको सङ्ख्यामा गुरु गोरखनाथको चरणकमलमा रोट चढ्छ। यी सबै रोटलाई विशेष पूजनका साथ चढाइएपछि सबैलाई प्रसादका रूपमा बाँड्ने गरिन्छ। के बूढा, के युवा, के केटाकेटी, सबैले रोटलाई महाप्रसादको रूपमा ग्रहण गर्न तँछाड-मछाड गर्छन् । आखिर रोट महाप्रसाद त तँछाड-मछाड गरेर पनि पाइने कुरा होइन । जसले रोट प्रसाद ग्रहण गर्दछ त्यो आत्मा नै धन्य हुन्छ । त्यो आत्माका युग युगान्तरका पाप कर्महरू, दोषहरू नाश हुन्छन् र एउटा जीवले मुक्ति प्राप्त गर्नका लागि सजग मार्ग निर्माण हुन्छ । तसर्थ महाप्रसाद रोट ग्रहण गर्नाले हुने शारीरिक, मानसिक र आध्यात्मिक फाइदाहरू वर्णनातीत छन् ।

रोट महोत्सवमा दैनिकरूपमा हुने गुरु आरतीमा पनि धेरै व्यक्तिहरूको सहभागिता रहने गर्दछ। बिनाप्रयास स्वत: आनन्द आउने आरतीमा साधक साधिकालगायत स्थानीय व्यक्तिहरूको सहभागिता दैनिकरूपमा बढ्दै गएर पछि-पछि त आरती गर्ने ठाउँ खचाखच भरिन जान्छ । दिव्य गुरु आरतीबाट पनि रोट महोत्सवमा धेरैले गुरुदेवहरूको कृपा, आशीर्वाद प्राप्त गर्ने अवसर पाउँदछन् ।

रोट महोत्सवको अर्को आकर्षण भजन-कीर्तन र नृत्य हो। समीको चौतारामा घन्किने भजनसँगसँगै भावमा नाच्ने साधक साधिकाहरू नाचेर कहिल्यै थाक्दैनन्, न त गाएर नै कोही थाक्दछन् । बरु गायनमा जोश, जाँगर थपिँदै जान्छ, नाच्नेहरूको गति बढ्दै जान्छ ।

शुरुदेखि अन्त्यसम्म महोत्सवमा कार्यक्रमहरू भइरहेका हुन्छन् । कतै हवन भइरहेको दृश्य त कतै भजनको दृश्य, कतै भोजनका दृश्य त कतै अर्पणको दृश्य, त्यस्तै कतै गुरुकार्यका लागि दौडादौडको दृश्य त कतै औषधि वितरणको दृश्य ! अत्यन्तै आनन्द दिने दृश्य देख्दा जो कोहीलाई पनि आनन्द र शान्ति प्राप्त हुन्छ । गुरु कार्यमा दत्तचित्त र भावभक्तिका साथ खट्ने कार्यकर्ताहरूदेखि लिएर अन्य उपस्थित सबै आनन्दमा हराइरहेका हुन्छन् महोत्सवको एघारै दिन !

एघार दिनसम्म सिद्धाश्रम शक्ति केन्द्रका प्राणप्रतिष्ठित सामग्रीहरूको पनि वितरण हुन्छ । प्राणप्रतिष्ठायुक्त चैतन्य सामग्री खरीद गरेर पनि रोट महोत्सवमा धेरैले सद्गुरुदेवहरूलगायत देवीदेवताहरूको कृपा, आशीर्वाद प्राप्त गर्छन् । अर्कोतिर

**नेपालमा शान्ति र स्थायित्वका लागि भएका अनेकौं प्रयासहरू विफल हुँदै राष्ट्रको स्थिति अत्यन्तै जटिल बनिरहेको समयमा २०६१ सालमा सर्वप्रथम रोट महोत्सवको श्रीगणेश भएपछि देशमा अमन चैन तथा शान्ति स्थापना हुँदै गएको आभास सबैले गरेका छन् । राष्ट्रको अस्तित्व नै संकटमा परेको अवस्था, कहालीलाग्दो परिवेशमा सम्पन्न रोट महोत्सवबाट नेपालमा परिवर्तन भइरहेको र पछिल्लो क्रममा संविधान सभाको निर्वाचन पनि सफलताका साथ सम्पन्न भएको, देश राजनैतिक रूपान्तर णको दिशामा अगाडि बढिरहेको परिप्रेक्ष्यमा पुनः एउटै महामन्त्रलाई आत्मसात् गरेर अर्थात् एउटै अचूक उपायलाई अवलम्बन गरेर गोरक्ष शक्तिको जागरण गर्नु परेको छ ।**

रोट महोत्सवमा रोट बनाउन चाहिने खाद्य सामग्री, विभिन्न प्रकारका मसलाहरू र नगद संकलन काउण्टरमा मानिसहरू सहयोग सामग्री र नगद सहयोग गरिरहेका हुन्छन् । गुरु गोरखनाथको चरणकमलमा अर्पण गर्ने रोट निर्माणका लागि हुने यस्तो सहयोगको अवसर पाएर सबै धन्य-धन्य हुन्छन् किनकि गुरु गोरखनाथलाई सबैभन्दा प्रिय वस्तु रोट हो भने यसको अर्पणमा सहयोग पुऱ्याउनु त उच्चकोटिको अहोभाग्य हो ।

यसप्रकार एघार दिनसम्म गोरखा जिल्लामा अवस्थित गोरख गुफा र यसवरिपरि विशेष उत्सव छाइरहन्छ । यसपटक पनि ज्येष्ठ ७ गतेदेखि १७ गतेसम्म रोट महोत्सव हुन गइरहेको छ । त्यस अवसरमा सबै गोरखा जाऔं र रोट महोत्सवमा भाग लिऔं, आफ्नो जीवनका दुर्भाग्यलाई सौभाग्यमा परिवर्तन गर्ने अवसरबाट वञ्चित नहोऔं ।

**रोट महोत्सवको आवश्यकता–**

नेपाल भूमि गोरक्ष भूमि हो जुन परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको आशीर्वादबाट सिर्जिएको छ । तसर्थ, उहाँप्रति कृतज्ञ हुनु, उहाँको उच्च सम्मान गर्नु प्रत्येक नेपालीको प्रथम कर्तव्य हो । नेपालीहरू आफ्नो यस कर्तव्यबाट विमुख हुनाले नै आज संकटको भुमरीमा रुमल्लिरहेका छन् । तर ढिलै भए पनि परमपूज्य सद्गुरुदेवहरूले हाम्रो आँखा खोलिदिनु भएको छ । गुरु गोरखनाथलाई प्रसन्न गर्न हामीलाई रोट महोत्सवजस्तो दिव्य कार्यक्रम गर्ने आदेश तथा निर्देशन प्रदान गरिदिनुभएको छ । यस निर्देशनलाई परिपालन गरेर सम्पूर्ण नेपाल र नेपालीहरूको भविष्य उज्ज्वल पार्ने महान् अवसरका रूपमा रोट महोत्सव कार्यक्रमलाई लिनुपर्ने हुन्छ । रोट कार्यक्रमलाई व्यापकता दिई यसबाट देश मात्र होइन, अन्तर्राष्ट्रिय जगत्मा नै शान्ति र समुन्नतिको बिगुल फुक्नु पर्नेछ । यस क्रममा यस्तो महोत्सवलाई जोसुकै जहाँसुकै भए, रहे पनि सहयोग गर्नु आत्मोन्नतितिर बढ्नु हो । यसरी हामीले आफ्नो आत्माको उद्धार गर्दै सबैको कल्याण गर्नुछ । यस शुभ-अवसरलाई रोट महोत्सवले पूर्ण गर्ने कुरामा ढुक्क हुन सकिन्छ ।

चाहे त्यो सत्य युग होस् वा त्रेता, द्वापर होस् वा कलि, स्वर्ग, मर्त्य, पाताल होस् वा जुनसुकै ब्रह्माण्ड, जेसुकै भए पनि श्री श्री महायोगी गुरु गोरखनाथको कृपा र आशीर्वादले नै सहज रूपमा सञ्चालन हुने कुरा विभिन्न धार्मिक ग्रन्थ, पुराण र इतिहासमा स्पष्ट उल्लेख भएको पाइन्छ । चारै युगका कठिन परिस्थितिहरूमा सशरीर प्रकट भएर लोककल्याण गर्नुभएको प्रसंग होस् वा ब्रह्मा, विष्णु, महेश्वरलाई आफ्नो शिष्य बनाएर ज्ञान प्रदान गर्नुभएको प्रसंग होस्, गोरक्ष शक्तिले नै सम्पूर्ण जीव जगत् सञ्चालन भएका धेरै उदाहरणहरू हामी पाउन सक्छौं ।

नेपालको इतिहासका विभिन्न कठिन

कालखण्डहरू चाहे नरेन्द्रदेवको पालामा होस् वा विखण्डित नेपालको एकीकरणमा होस् अथवा नेपाल अंग्रेज युद्धमा नै किन नहोस्, श्री श्री महोयोगी गुरु गोरखनाथको कृपा, आशीर्वाद प्रत्यक्षरूपमा परेको र देशका कठिन परिस्थितिहरू पनि सहज र सरलताका साथ साम्य भएको कुराको प्रमाण आज पनि नेपालको इतिहासमा पाउन सकिन्छ । तर आज सम्पूर्ण नेपालीहरूले आफ्ना आराध्यदेवलाई खुशी बनाउने त टाढाको कुरा उहाँको नाम सुने पनि राम्रोसँग चिन्न सक्दैनन्, नेपालीहरूका लागि यो भन्दा दु:खदायी कुरा अरू के नै हुन सक्छ र ?

गुरु गोरखनाथलाई प्रसन्न बनाउन नसकेसम्म जति जे गरे पनि, जस्तोसुकै सिद्धान्त र वादका कुरा लागू गर्न खोजे पनि, जुनसुकै मन्दिर, देवीदेवता र जुनसुकै धर्मगुरुकहाँ धाए पनि नेपाल परिर्वतन होस्, राष्ट्रमा सुख, शान्ति छाओस्, उन्नति र प्रगातिको द्वार खुलोस् यो सम्भव नै छैन किनकि नेपाल गोरक्ष भूमि हो, सम्पूर्ण १०८ लक्ष्मी र सम्पूर्ण दैवी शक्तिलाई पनि आफ्नो वशमा राख्नुहुने राष्ट्रगुरुलाई नै स्मरण गर्दैनौं, खुशी बनाउँदैनौं भने अरुका अगाडि जति टाउको ठोके पनि के नै हुन्छ र ?

त्यसैले प्रत्येक घर, समाज र राष्ट्रमा सुख, शान्ति छाउन, प्रत्येक नेपालीमा खुशीको लहर आउन, विकास र उन्नतिका द्वारहरू खुल्न सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको कृपा, आशीर्वाद अपरिहार्य छ र यो निष्कर्ष हाम्रो मात्र होइन, यो आवाज हाम्रो मात्र होइन, इतिहासको प्रत्येक कालखण्ड यस तथ्यको साक्षी छ, सृष्टि चक्रको प्रत्येक युग साक्षी छ र अनन्त ब्रह्माण्डको प्रत्येक लोक साक्षी छ । उहाँलाई सजिलै खुशी बनाएर आशीर्वाद प्राप्त गर्न सकिने माध्यम नै 'रोट अर्पण' कार्य हो । अझ उहाँकै प्रकट दिवस 'वैशाखी पूर्णिमा' मा अर्पण गर्न पाउनु त झन् सौभाग्यको कुरा हो ।

रोट अर्पण भूमि अर्पण हो । साङ्केतिकरूपमा रोटलाई नै भूमिको रूपमा अर्पण गरिन्छ । विशेष गरी विषम परिस्थिति सृजना हुँदा त्यसको निदानका लागि, दैवी प्रकोपजस्ता विपत्ति निवारणका लागि, जनकल्याणका लागि सवालाख रोटको सङ्कल्प गरी गुरु गोरखनाथलाई चढाउने परम्परा रहेको पाइन्छ ।

नेपालमा शान्ति र स्थायित्वका लागि भएका अनेकौं प्रयासहरू विफल हुँदै राष्ट्रको स्थिति अत्यन्तै जटिल बनिरहेको समयमा २०६१ सालमा सर्वप्रथम रोट महोत्सवको श्रीगणेश भएपछि देशमा अमन चैन तथा शान्ति स्थापना हुँदै गएको आभास सबैले गरेका छन् । राष्ट्रको अस्तित्व नै संकटमा

परेको अवस्था, कहालीलाग्दो परिवेशमा सम्पन्न रोट महोत्सवबाट नेपालमा परिवर्तन भइरहेको र पछिल्लो क्रममा संविधान सभाको निर्वाचन पनि सफलताका साथ सम्पन्न भएको, देश राजनैतिक रूपान्तरणको दिशामा अगाडि बढिरहेको परिप्रेक्ष्यमा पुनः एउटै महामन्त्रलाई आत्मसात् गरेर अर्थात् एउटै अचूक उपायलाई अवलम्बन गरेर गोरक्ष शक्तिको जागरण गर्नु परेको छ । गोरक्ष शक्तिको जागरण रोट महोत्सवबाट शीघ्रातिशीघ्र हुने हुनाले सिद्धाश्रम शक्ति केन्द्रले यस महोत्सवलाई प्रत्येक वर्ष निरन्तरता दिइरहेको हो । यही निरन्तरताको फलस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले आउँदो वैशाखी पूर्णिमाको अवसर पारेर सवालाख रोट अर्पण कार्यक्रमको शृंखलामा अर्को इँटा थप्नेछ– पाँचौं रोट महोत्सवको आयोजना गरेर । इतिहास साक्षी छ, जब-जब नेपाल भूमि संकटमा परेको थियो तब-तब गुरु गोरखनाथको कृपा, आशीर्वादले राष्ट्रको संकट टरेको थियो । राजनैतिक रूपान्तरणको दिशामा अघि बढेको आजको नेपालमा पाँचौं रोट महोत्सवले दिगो शान्ति स्थापनाको दिशामा महत्त्वपूर्ण भूमिका निर्वाह गर्ने कुरामा दुईमत नहोला । जय गुरुदेव !

नेपाललगायत भारतमा पनि गुरु गोरखनाथको मठ-मन्दिरमा विशेष तिथि र बारहरूमा उहाँको चरणकमलमा रोट अर्पण गर्ने प्रचलन रहिआएको छ । गुरु गोरखनाथको प्रिय वस्तुको रूपमा रहेको रोट उहाँको चरणकमलमा अर्पण गर्दा उहाँ खुशी हुनुभएर राष्ट्रमा देखिएका विप्लव, महामारी, प्राकृतिक प्रकोपजस्ता समस्याहरू हटेर जान्छन् । गोर्खाली सेनाले लडाइँको समयमा गुरु गोरखनाथलाई रोट चढाएर युद्ध आफ्नो पक्षमा पारेको र युद्धको बेला केवल रोट मात्र सेवन गरेर रणक्षेत्रमा होमिने बहादुर सैनिकहरूको सन्दर्भ इतिहासमा पाउन सकिन्छ । नेपालको केही क्षेत्रमा बालकको अन्नप्रासनका बेलामा रोट पकाएर खुवाउने चलन रहिआएको छ । सबैका आराध्य गुरु गोरखनाथको आशीर्वाद र कृपा पाउन गोरखालगायत अन्य जिल्लामा घर-घरबाट पनि उहाँको श्रीचरणकमलमा रोट अर्पण गर्ने गरेको पाइन्छ ।

# रोट अर्पण गर्नु गुरु गोरखनाथलाई शीघ्र प्रसन्न पार्नु हो

सा. प. नं. १ सदस्य श्री लालबहादुर ढकाल

२०६१ सालदेखि हामीले सवालाख रोट अर्पणको कार्यक्रम शुरु गरेका हौँ। गुरु गोरखनाथलाई प्रसन्न पारेर उहाँको कृपा, आशीर्वाद प्राप्त गर्नका लागि विभिन्न किसिमका उपायहरू छन्। विभिन्न उपायहरूमध्ये सबैभन्दा भरपर्दो र सरल विधि नै रोट चढाउने हो। त्यसमा पनि सवालाख रोट चढाएपछि गुरु गोरखनाथ छिटै प्रसन्न हुनुहुन्छ, भक्तहरूको इच्छा, आकांक्षा पूरा गरिदिनु हुन्छ। गुरु गोरखनाथले सम्पूर्ण प्राणीहरूलाई शान्ति र आनन्द प्रदान गर्नुहुन्छ। त्यसकारण हाम्रो संस्थाको तर्फबाट उहाँलाई सवालाख रोट चढाउने कार्यक्रमलाई २०६१ सालमा पहिलोपटक गरेका थियौँ। त्यतिबेला रोट अर्पण गर्ने क्रममा विभिन्न किसिमका सूक्ष्म टिमहरू निर्माण भएका थिए। त्यसका अतिरिक्त स्थूलरूपका टिमहरू पनि निर्माण भएका थिए। पहिलोपटकको रोट अर्पण महोत्सवमा 'बत्रिचिड' भन्ने सूक्ष्म टिमले कार्यक्रम सम्पन्न गरेको थियो। यसपटक पनि सवालाख रोट अर्पण कार्यक्रमका लागि गोमकादु टिम नं. ११० को सूक्ष्म टिम निर्माण भएको छ। उक्त टिम सूक्ष्म सत्तामा खटिरहनु छ भने स्थुल सत्तामा सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ताहरू गुरुकार्यमा खटिरहनु भएको छ। यसपटकको रोट अर्पण कार्यक्रमलाई पाँचौं रोट महोत्सवका रूपमा भव्यताका साथ सम्पन्न गर्न गइरहेका छौँ। रोट महोत्सवलाई सम्पन्न गर्ने क्रममा विभिन्न कार्यक्रमहरू संचालन भइरहेका छन्। जस्तै विशेष गुरु-पूजन, विशेष हवन साधना कार्यक्रम, विशेष संगीत कार्यक्रमहरू संचालन भइरहेका छन्। यी कार्यक्रमहरू संचालन हुने क्रममा स्थूलरूपमा खट्ने कार्यकर्ताहरू पनि जताततै कुदिइरहनु भएको छ। सूक्ष्मरूपमा खटिनुभएका जो जति हुनुहुन्छ, उहाँहरू पनि खटिइरहनु भएको छ। यो कार्यक्रम अत्यन्तै दिव्य, भव्य र उल्लासमय वातावरणमा अघि बढ्न गइरहेको छ।

हाम्रो मुख्य कार्यक्रम भनेको सवालाख रोट अर्पण गर्ने कार्यक्रम हो किनभने हामीले श्री श्री महायोगी गुरु गोरखनाथलाई खुशी पार्नुछ, उहाँको कृपा र आशीर्वाद प्राप्त गर्नुछ, समस्त धर्तीमा एउटा आध्यात्मिक वातावरण बनाउनु छ। यो सम्पूर्ण उहाँकै आशीर्वादबाट मात्र सम्भव छ। यो एउटा व्यक्तिले गरेर हुने कार्य हैन। उहाँ खुशी हुनुभयो भने, उहाँले दृष्टि लगाइदिनु भयो भने समस्त जीव, जीवात्मा, समस्त प्राणी मात्रको रक्षा हुन सक्छ। त्यसैले हामीले एउटै विकल्प देख्यौँ– केवल उहाँलाई खुशी पार्ने। रोट कार्यक्रमबाहेक उहाँलाई खुशी पार्ने अन्य कार्यक्रमहरू पनि छन्। ती अन्य कार्यक्रमहरू आउँदा दिनमा उहाँको आदेश, निर्देशन भयो भने अवश्यै ती कार्यक्रमहरूको आयोजना गर्नेछौँ।

रोट अर्पण गर्ने कार्यक्रममा विभिन्न प्रकारका अन्य कार्यक्रमहरू किन आवश्यक छन् भन्ने सन्दर्भमा परमपूज्य सद्‌गुरुदेवहरूको सूक्ष्म निर्देशनअनुसार सवालाख रोट अर्पण गर्ने, रोट चढाउने बेलामा सूक्ष्म सत्ताको माध्यमबाट समस्त ऋषिगणहरू पनि आइपुगेका हुन्छन्, समस्त देवीदेवताहरू पनि आइपुगेका हुन्छन्, समस्त यक्ष, गन्धर्व, किन्नर, नाग-नागिन, अप्सराहरू आएका हुन्छन्। यी सम्पूर्णको सूक्ष्म आशीर्वाद प्राप्त गर्न पनि जरुरी छ। उनीहरूको सूक्ष्म आशीर्वाद प्राप्त गर्नका लागि पनि तिमीहरूले त्यही-त्यही कर्म गर्नू, त्यसबाट मात्रै तिमीहरूलाई आशीर्वाद मिल्नेछ भन्ने गूढ रहस्यलाई बताइदिनु भएको कारणले गर्दा यक्ष, गन्धर्व, किन्नर, नाग-नागिन, अप्सराहरूलाई खुशी पार्नका लागि हाम्रो विशेष संगीत कार्यक्रम संचालन भइरहेको छ। त्यस्तैगरी, देवीदेवताहरूलाई खुशी पार्नका लागि मन्त्र जप, ध्यान, पूजा जस्ता विभिन्न कार्यक्रमहरूको आयोजना भएको हो। यी सम्पूर्ण कार्यक्रमहरू एक-अर्काका परिपूरक छन्, यी सम्पूर्ण अंश-अंशरूपका कार्यक्रमहरू अन्तत्वोगत्वा पूर्णमा परिणत हुन्छन् र गुरुकृपा प्राप्त हुन्छ। यसकारण, हामीले यस्ता विभिन्न किसिमका कार्यक्रमहरू आयोजना गरेका हौँ।

रोटको बारेमा भन्नुपर्दा शास्त्रले के बताएको छ भने एउटा रोट अर्पण गर्दा एउटा पृथ्वी दान गरे बराबरको पुण्य मिल्छ। त्यस रोटलाई प्रसादको रूपमा, आफ्नो आशीर्वादको रूपमा भक्तहरूले प्राप्त गर्दछन्। यो रोट जसले खान्छ, जसले यसलाई ग्रहण गर्दछ, त्यो आत्मा नै धन्य हुन्छ, त्यो आत्माका जुग-जुगान्तरका पापकर्महरू छन्, विभिन्न किसिमका दोषहरू छन् भने यस रोट ग्रहण गर्नासाथ नै, खानासाथ नै गुरु गोरखनाथको आशीर्वाद मिल्दछ। गुरु गोरखनाथ स्वयम् शिव हुनुहुन्छ। उहाँको आशीर्वाद मिल्नासाथ जुग-जुगान्तरका जे-जति दोषहरू छन्, कर्म, कर्मादि दोषहरू छन्, ती सम्पूर्ण नाश हुन्छ र एउटा जीवले मुक्ति प्राप्त गर्नका लागि सहज मार्ग निर्माण हुने भएकोले रोट खाने परम्परा बसेको हो।

यसपटक पनि सवा लाख रोट अर्पण कार्यक्रमका लागि गोमकादु टिम नं. ११० को सूक्ष्म टिम निर्माण भएको छ। उक्त टिम सूक्ष्म सत्तामा खटिरहनु भएको छ भने स्थूल सत्तामा सिद्धाश्रम शक्ति केन्द्रका कार्यकर्ताहरू गुरुकार्यमा खटिरहनु भएको छ।

**आध्यात्मिक नेतृत्वकर्ता तहबाट गुरूसेवा दलमा प्रवेश पाउन सफल हुनु भएकोमा पदोन्नत सबैलाई हार्दिक बधाई !**

## सिद्धाश्रम शक्ति केन्द्र

### गोरखा बसपार्क

आरती सञ्चालन केन्द्र, दरबारमार्ग, गोरखा
आरती सञ्चालन केन्द्र, नारेश्वर हुलाक डाँडा
आरती सञ्चालन केन्द्र, लक्ष्मी बजार, गोरखा
आरती सञ्चालन केन्द्र, दुम्सेरी गाउँ

**आध्यात्मिक नेतृत्वकर्ता तहबाट गुरूसेवा दलमा प्रवेश पाउन सफल हुनुभएकोमा पदोन्नत सबैलाई हार्दिक बधाई !**

## सौरपानी सम्पर्क कार्यालय , गोरखा

आरती सञ्चालन केन्द्र, कोइराला गाउँ
आरती सञ्चालन केन्द्र, मसेल गाउँ

**नयाँवर्ष २०६५ तथा रोट महोत्सव २०६५ को उपलक्ष्यमा समस्त दर्शक महानुभावहरूलाई हार्दिक मङ्गलमय शुभकामना !**

## आराधना सिनेमा हल

जोरपाटी, काठमाडौं

नेपालको मात्र होइन, विश्वकै मानचित्रमा ऐतिहासिकरूपमा परिचित जिल्ला गोरखामा रहेको गोरख गुफाले प्रसिद्धि पाएको छ । हेर्दा र सुन्दा सामान्यझैं लाग्ने यो गोरख गुफा आफैमा दिव्यतम एवं अवर्णनीय गुफा हो । पहिले यो सामान्य ओढारजस्तो मात्र भए पनि हाल यसलाई मन्दिरको रूप दिइएको छ ।

गोरख धुनीको अगाडिपट्टिबाट दुईतिर राखिएका घण्टहरूको बीचबाट केही खुड्किला तल झरेपछि गोरख गुफाको प्रवेशद्वारमा पुगिन्छ । यस द्वारबाट भित्र छिरेपछि दायाँतिर एउटा ठूलो घण्ट राखिएको देखिन्छ । गुरु गोरखनाथ स्वयं शिव हुनु भएकोले भक्तहरूद्वारा चढाइएका ठूला-साना थुप्रै त्रिशूलहरू त्यहाँ देखिन्छन् भने गुफाभित्र जङ्गबहादुरले चढाएको अलि ठूलो त्रिशूल पनि त्यहाँ देखिन्छ । गुफाभित्र पस्नेबित्तिकै त्यहाँबाट पनि भित्र जानको लागि काठको एउटा सामान्य ढोका रहेको छ । त्यस ढोकाको देब्रेतिर गुरु गोरखनाथको एउटा ठूलो तस्वीर सिद्धाश्रम शक्ति केन्द्रको सौजन्यबाट टाँगिएको छ ।

सानो ढोकाभित्र छिरेपछि त्यहाँबाट दायाँतिर एउटा ठूलो सुरुङजस्तो देखिन्छ भने बायाँतर्फ गुरु गोरखनाथको आसन राखिएको छ । आसनको छेउमा गुरु मच्छिन्द्रनाथ तथा भगवान् बुद्धको मूर्ति पनि राखिएको छ भने त्यतापट्टि पनि एउटा सुरुङ देख्न पाइन्छ । यी दुई सुरुङमध्ये एउटा सुरुङबाट मानसरोवर र अर्को सुरुङबाट काठमाडौंको मृगस्थलीमा निस्कन सकिन्छ भन्ने विश्वास रहँदै आएको पाइन्छ । भित्रपट्टि पस्नको लागि पारदर्शी सानो कोठाको ढोका राखिएको छ ।

यी दृश्यहरू जसले पनि देख्न सक्दछ । सानो ढोका खोल्नेबित्तिकै दायाँतर्फ महाभैरव (ठिङ्ग भैरव) लाई स्थापना गरिएको छ । यहाँ भैरव पूजा गरिन्छ र यसैको माथिपट्टि अन्य देवीदेवताहरूका मूर्तिहरू पनि राखिएको पाइन्छ । गुफामा दायाँपट्टि राधाकृष्णको साथमा पृथ्वीनारायण शाहको मूर्ति, भगवान् बुद्धको मूर्ति, गुरु मच्छिन्द्रनाथको श्रीमूर्ति रहेको पाइन्छ ।

**पूजा गर्ने स्थल–**

खास गरी यस गुफामा जाने मानिसहरूले गुफाभित्रको ढोका खुल्दा अर्थात् पूजारी नाथहरू हुँदा भित्रै गएर पूजा गर्न पाउने व्यवस्था छ भने सानो ढोका बन्द हुँदा त्यहीं ढोकानिर र त्यहाँबाट भित्र फूलहरू चढाई पूजा गर्ने गरिन्छ ।

श्री श्री महायोगी गुरु गोरखनाथका वास्तविक पूजारी नाथहरूबाट उहाँको दिव्य आसनमा र त्यहाँ राखिएको चाँदीको पादुकामा पूजा गर्ने गरिन्छ । त्यही पादुका र आसनमा दैनिक पूजा गर्ने गरिन्छ । साथै, भक्तजनहरूले ल्याएको रोट, प्रसाद पनि चढाइन्छ र प्रसादको रूपमा बाँड्ने गरिन्छ । यहाँ दैनिक पूजा पञ्चोपचार विधिले र विशेष पूजा षोडशोपचारले गर्ने गरिन्छ । साथै, पूजारीहरूद्वारा स्तवन पाठ, रुद्रीपाठ, गोरक्ष सहस्रनाम पाठ गर्ने गरिन्छ ।

प्रत्येक बुधबारदेखि मङ्गलबारसम्म एकजना पूजारी, त्यसपछि अर्को पूजारीको पालो गरी चारजना पूजारीले नित्य पूजा संचालन गर्ने गरेको पाइन्छ । यी चार पूजारीहरूलाई जुठो, सूतक आदि केही परेमा वैकल्पिक पूजारीको व्यवस्था मिलाइको छ ।

पहिले पहिले पूजारीहरूले कार्तिक र चैत्र महिना (जसलाई तान्त्रिक महिना भनिन्छ) मा घरदैलोमा गई मन्त्र पढी फिरी लगाई गाउँघरलाई सुरक्षा दिने गरेको पाइन्छ जुन परम्परा समाजमा 'फिरी लगाउने' प्रथाको रूपमा हालसम्म पनि प्रचलित छ ।

रोट चढाउने प्रथा यस गुफाको विशेष आकर्षण रहँदै आएको छ । गुरु गोरखनाथ रोट चढाएपछि खुशी हुनुहुन्छ भन्ने धार्मिक मान्यता यस गोरख गुफामा रहेको पाइन्छ । रोटका लागि ल्याइएका सामग्रीहरू जस्तै पिठो, घिउ, मसला आदि पूजारीलाई जिम्मा लगाइन्छ र पूजारीले सहयोगीहरूको माध्यमबाट भक्तजनद्वारा ल्याइएका सामग्रीबाट रोट पकाई गुरु गोरखनाथको चरणमा रोट पूजा सम्पन्न गर्दछन् र रोट प्रसादको रूपमा भक्तजनलाई दिइन्छ । यसरी गुरु गोरखनाथलाई भक्तजनले रोट चढाई पूजन, दर्शन गरी सन्तुष्ट भएर फर्कन्छन् ।

भैरवलाई चढाउनको लागि यहाँ कुखुराको भाले ल्याएको पाइन्छ । गुफाभित्र दायाँतर्फ रहेका भैरवलाई पूजा गरी गुफाको बाहिरी ढोकामा यहाँको जल छर्की भालेलाई मन्साइन्छ र माथि बलि दिने ठाउँमा लगी त्यहाँ नै काट्ने गरिन्छ ।

**गुफाको दिव्यता–**

यस धर्तीमा श्री श्री महायोगी गुरु गोरखनाथ प्रथमपटक यही गुफाबाट नै प्रकट हुनुभएको थियो । साक्षात् भगवान् श्री शिव गोरक्ष प्रथमपटक यस गुफाबाट प्रकट हुनुभएकोले नै यो गुफा ऐतिहासिक, धार्मिक, आध्यात्मिक एवं सांस्कृतिकरूपमा पनि आफैमा अद्वितीय रहेको छ । योगीहरूमा महायोगी, गुरुहरूका पनि गुरु, नाथहरूका पनि महानाथ, अनन्तकोटि ब्रह्माण्डका मालिक, परब्रह्म परमात्मा श्री श्री महायोगी गुरु गोरखनाथ आफैमा दिव्यतम व्यक्तित्व हुनुहुन्छ, अद्वितीय गरिमा एवं महिमाले भरिपूर्ण महानाथ हुनुहुन्छ । यस्ता दिव्यतम व्यक्तित्व प्रथमपटक यसै गुफाबाट प्रकट हुनु भएकोले यो गुफा शक्तिले भरिपूर्ण छ । आध्यात्मिक शक्तिको खजाना छ यस गुफामा । देवी देवताहरू, ऋषिमुनि, योगी, महायोगी आदि सबै यसै गुफाको दर्शनका लागि सधैं लालायित रहन्छन् । एकपटक दर्शन मात्रै गर्दा पनि सयौं गुना फल प्राप्त गर्न सकिने यस गुफाको महिमा, गरिमा, उच्चता हजारौं, लाखौं जिब्रा भएका शेषनागले पनि गाउन सक्दैनन् ।

यो गुफाको तुलना यस विश्व ब्रह्माण्डमा कहीं कतै रहेका अन्य गुफासँग गर्न सकिँदैन । धेरै व्यक्तिहरूलाई यस गुफाको महत्त्व थाहा छैन । यस गुफाभित्र आज पनि कैयौं योगी, महायोगीहरू विभिन्न रूपमा, सूक्ष्मरूपमा विद्यमान छन्, तपस्यारत छन् एवं गुफाको सुरक्षार्थ तैनाथ छन् ।

गुरु गोरखनाथको कृपा, आशीर्वाद सजिलोसँग प्राप्त गर्न सकिने भएकोले पनि यस गुफाको विशेष महत्त्व रहँदै आएको छ । यस गुफाबाट सूक्ष्म शरीरको माध्यमबाट सावर लोकसम्म पुग्न सकिन्छ, गुरु गोरक्षको दर्शन गर्न सकिन्छ । साधनामा सफलता प्राप्त गर्न नसकेकाहरूलाई यो गुफा सिद्धि एवं सफलताको केन्द्र मानिन्छ । सावर साधनाहरू छिटो सिद्ध गर्ने अनुपम स्थल यसैलाई मानिन्छ । आफ्ना इच्छित मनोकामना, समस्या, दुःख, कष्ट आदिबाट हजारौं, लाखौं व्यक्तिहरूले यस गुफाको माध्यमबाट समाधान पाएका छन् ।

यसरी केही कष्ट उठाएर उकालो बाटो पार गर्दै यस गुफामा पुगेपछि हामी आत्माले गति पक्डिने स्थानमा पुग्दछौं जहाँबाट जीवनको यात्राले ऊर्ध्वमुखी गति लिन सक्दछ । यहींबाट गुरु गोरखको कृपादृष्टि प्राप्त गरी हामीले जीवनको वास्तविक सार्थकता प्राप्त गर्न सक्दछौं ।

विश्वमा कहीं कतै तुलना नभएको यस गुफामा एकको सय गुना फल प्राप्त हुन सक्दछ अर्थात् एक घण्टा ध्यान, साधना, पूजा आदि गरे सयौं घण्टा बराबरको फल प्राप्त गर्न सकिन्छ । विश्व ब्रह्माण्डकै अद्वितीय एवं दिव्यतम गुफाको दर्शन गरौं, जीवनलाई धन्य बनाऔं । तपाईंले पनि जीवनमा अवश्य एकपटक यस दिव्य गुफाको दर्शन गर्नुहोला । जय गुरुदेव !

## वृहत् त्रिशूल

सिद्धाश्रम शक्ति केन्द्रले २०६१ सालको प्रथम रोट महोत्सवमा श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा अर्पण गरेको विशाल त्रिशूललाई गोरख गुफाको तल बायाँतिर राखिएको छ । सम्पूर्ण मानवकै गौरवको प्रतीक मानिएको साढे सत्र फिटको पित्तलको यस त्रिशूलले गुफा वरिपरिको दिव्यता र भव्यतालाई बढाइरहेको महसुस गर्न सकिन्छ ।

# गुरु गोरखनाथको प्रसन्नतामा नै सम्पूर्ण मानवको कल्याण छ ।

**सा.प.नं. २ सदस्य श्री रामजी अर्याल**

गुरु गोरखनाथ सबैभन्दा छिटो प्रसन्न हुने विषय नै रोट भएको नाताले पनि गुरु गोरखनाथ खुशी हुँदा नै यो देशमा कल्याण हुने, जगत्मा कल्याण हुने, सारा विश्वको कल्याण हुने कुरालाई हृदयंगम गरेर सिद्धाश्रम शक्ति केन्द्रले समग्र नेपाल र नेपालीहरूको कल्याणको लागि, एउटा समग्र आध्यात्मिक चेतनाको जागरणको लागि र यस समाजमा गोरक्ष निखिल युग ल्याउनका लागि सवालाख रोट अर्पण कार्यक्रमलाई विशेष कार्यक्रमको रूपमा प्रत्येक वर्ष सम्पन्न गरिरहेको हो ।

सिद्धाश्रम शक्ति केन्द्रले गत वर्षहरूमा जस्तै यसपालि पनि सवालाख रोट अर्पण भव्यरूपमा सम्पन्न गर्न गइरहेको छ । देशमा अशान्ति, अराजकताको परिस्थितिमा, समाज गतिहीन अवस्थामा रहेको बेला, धर्म र अध्यात्ममाथि नै प्रश्नचिन्ह लागिरहेको बेला, यस्ता परिस्थिति निराकरण केवल गोरख शक्तिको जागरणमा हुन्छ भन्ने कुरा इतिहासले देखाइसकेको छ । नेपालमा जब-जब गुरु गोरखनाथमाथि अनादर गरिन्छ, उहाँप्रति असीम श्रद्धा, भक्ति दिइँदैन तब-तब यस्ता विकराल परिस्थितिहरूको सृजना हुने कटुसत्य हाम्रो इतिहासले छर्लङ्ग पारिरहेको छ। सिद्धाश्रम शक्ति केन्द्रले सवालाख रोटको माध्यमबाट सारा नेपालीहरूलाई एउटा चेतना दिन खोजेको हो । गुरु गोरखनाथ सबैभन्दा छिटो प्रसन्न हुने विषय नै रोट भएको नाताले पनि गुरु गोरखनाथ खुशी हुँदा नै यो देशमा कल्याण हुने, जगत्मा कल्याण हुने, सारा विश्वको कल्याण हुने कुरालाई हृदयंगम गरेर सिद्धाश्रम शक्ति केन्द्रले समग्र नेपाल र नेपालीहरूको कल्याणको लागि, एउटा समग्र आध्यात्मिक चेतनाको जागरणको लागि र यस समाजमा गोरक्ष निखिल युग ल्याउनका लागि सवालाख रोट अर्पण कार्यक्रमलाई विशेष कार्यक्रमको रूपमा प्रत्येक वर्ष सम्पन्न गरिरहेको हो र यसबाट विशेष किसिमका उपलब्धिहरू पनि हासिल हुन्छन् भन्ने कुरामा सिद्धाश्रम शक्ति केन्द्र विश्वस्त छ । सिद्धाश्रम शक्ति केन्द्र आफ्ना परम आराध्य सद्गुरुदेवहरूको महान योजना अर्थात् गोरक्ष निखिल युग निर्माणका खातिर अगाडि बढिरहेको छ ।

सामान्य व्यक्तिहरूको लागि दुर्लभ मानिएको, सामान्य मानिसहरूको पहुँचभन्दा धेरै परको कुरा रहेको सवालाख रोट कार्यक्रमलाई यसरी भव्यरूपमा व्यवस्थित पारामा आजसम्म कसैले पनि चढाएका थिएनन् र सिद्धाश्रम शक्ति केन्द्रमा लागिपर्ने समस्त समर्पित कार्यकर्ताहरूको सहयोग, परमपूज्य सद्गुरुदेवहरूको कृपा र आशीर्वादस्वरूप हामीले यस वर्ष पनि रोट महोत्सवलाई भव्यरूपमा मनाउन गइरहेका छौँ । यदि गुरुलाई हामीले यो रूपबाट खुशी बनाउन सक्यौँ भने, उहाँको कृपा, आशीर्वाद बर्षियो भने त आउँदा दिनमा पनि गोरक्ष प्रकट दिवसको पावन अवसर पारेर सवालाख रोट कार्यक्रमलाई निरन्तरता दिने हाम्रो लक्ष्य हो । बाँकी कुरा त परमपूज्य सद्गुरुदेवहरूको कृपा र आशीर्वादमा निर्भर गर्दछ । जय गुरुदेव !

**साधनात्मक आँधीबेहरी ल्याऔं ।**
**गोरक्ष निखिल शक्ति जगाऔं ।।**

आत्माखलु विश्वमूलम् ॐ कृण्वन्तो विश्वमार्यम् ।
गोरक्ष बालं गुरुशिष्यपालं शेषहिमालं शशिखण्डभालम् ।
कालस्य कालं जितजन्मजालं वन्दे जटालं जगदाब्जनालम् ॥

गोरक्षनाथ भवरूप भवाब्धिपोत,
भक्तार्तिनाशन विभो करुणैकमूर्ते ।
त्वत्पाद-पद्म-मकरन्द-मधुव्रतोऽहं,
तापं, मदीयमनसो हर देव सद्यः ।१।

गोरक्षनाथ मयि चेत् करुणातवेदृक्,
दीनस्त्वदीयचरणौ शरणं प्रपद्ये ।
नश्येदवश्यमथमानसवेदना में,
सिद्धिं ब्रजेन्निखिलब्रह्मविधिर्हि लोके ।२।

गोरक्षनाथ-रजसा चरणस्थितेन,
पूतं शिरो भवति भक्तजनस्य नूनम् ।
त्वद्दर्शनं हरति तस्य समस्तचिन्तां,
त्वत्सेवनं हरति पाप-पिशाच-पुञ्जम् ।३।

हे नाथ ! मामपि विलोकय दीनबन्धो,
सन्ताप-तप्त-हृदयं कृपणं क्षणेऽस्मिन् ।
पादानेते शिरसि मे वरदात्म-हस्तं,
कामं निधेहि गुरुदेव ! भवानुकूलः ।४।

दोषकरोऽस्मि भगवन्नुकम्पनीयः
निर्दोषता न सुलभा जगतीतलेऽस्मिन् ।
दोषकरेऽपि विमलद्युतिसंयुतेऽपि,
किं लाञ्छनं मनुजदृष्टिपथं न याति ।५।

आक्रम्यते जगति नैकविधैर्हि रोगै,
भोगी जनो विततभोग-विमूढचेताः ।
गोरक्षपाद-सरसीरुह-पूजनन्तु,
व्याधीर्हिनस्ति सकलान् खलु भोगमूलान् ।६।

बद्धोऽस्मि देव भव-मोह-समूह-जाले,
मोच्यस्त्वया सदयमार्तिहरेण तूर्णम् ।
देया च मे शुभमतिः सततं ययाऽहं,
त्वत्पाद-पद्म-युगलं विमलं भजेयम् ।७।

गोरक्षपत्तनमिदं प्रथितं पृथिव्यां,
तेपे तपः सततमत्र भवान् मुनीन्द्रः ।
योगस्य मार्गमुपदिश्य जनान् कृतार्थान्,
चक्रे भृशं सकललोक-शुभाभिलाषी ।८।

## कविता

### गोरख निखिल हाम्रो घरमा

नाच्दै गाउँदै बास बस्न आउनुभयो,
गोरख निखिल हाम्रो घरमा ।
सुख शान्तिको अनुभव हुन थाल्यो,
भक्तिभाव बढ्न थाल्यो मनमा ।
नाच्दै...

गोरख-निखिल नाम जप्दै यो संसारबाट
बिदा लिन पाउँ,
सधैं-सधैं तिम्रो चरणमा बास बस्न पाऊँ ।
नाच्दै...

भाव छैन, भक्ति छैन केही जान्दिन
जे जानेकी छु त्यही गर्छु खुशी हुनुहोला ।
नाच्दै...

गोरख-निखिल तिम्रो धाममा आउन मन लाग्छ
कहाँबाट आउने हो, बाटो देखाइदेऊ न ।
नाच्दै...

भूल भए क्षमा गर, रक्षा गर गोरख-निखिल
जे जानेकी छु त्यही गर्छु, ज्ञान दिनुहोला ।
नाच्दै...

ज्ञान छैन, भक्ति छैन, शिक्षा दिनुहोला
ज्योतिपुञ्ज गोरख-निखिल ।
हाम्रो घरमा फेरि बास बस्न आउनुहोला ।
नाच्दै...

–बनु श्रेष्ठ
शक्तिचोक, गोरखा



## हार्दिक आमन्त्रण

परमपूज्य सद्‌गुरुदेवको असीम अनुकम्पाले यही २०६५ साल जेठ महिनाको पहिलो बुधबारदेखि तान्त्रोक्त विन्ध्यवासिनी हवन संचालन हुन गइरहेको हुनाले प्रत्येक महिनाको पहिलो बुधबार उक्त कार्यक्रममा आफ्ना स्वजन, मित्रजनसहित सहभागी भई परमपूज्य सद्‌गुरुदेवहरू र माता विन्ध्यवासिनीको आशीर्वाद प्राप्त गर्नुहुन सम्पूर्ण साधक साधिका एवं भक्तजनहरूलाई हार्दिक आमन्त्रण गर्दछौं ।

**स्थानः विन्ध्यवासिनी मन्दिर प्राङ्गण**, पोखरा, कास्की ।
**समय : बिहान ८:०० बजे ।**



### जेठ महिनाका चाडपर्व

| | |
|---|---|
| १ गते | **तान्त्रोक्त महालक्ष्मी हवन** |
| २ गते | **तान्त्रोक्त बगलामुखी हवन**, मोहिनी एकादशीव्रत |
| ४ गते | प्रदोषव्रत |
| ६ गते | **श्री शिव गोरक्ष हवन** |
| ७ गते | **गोरक्ष प्रकट दिवस**, चण्डी पूर्णिमा, **तान्त्रोक्त बटुक भैरव हवन**, २५५२ औं बुद्ध जयन्ती |
| ८ गते | **दिव्य गुरु महोत्सव** |
| १५ गते | गोरखकाली पूजा, अष्टमीव्रत |
| १८ गते | अपरा एकादशीव्रत |
| १९ गते | प्रदोषव्रत |
| २९ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| ३२ गते | निर्जला एकादशीव्रत, तुलसी बीजारोपण |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**

# गुरु पादुका पूजन

सर्वप्रथम शुद्ध पवित्र भई, शुद्ध वस्त्र धारण गरी शारीरिकरूपले स्वच्छ भएपछि मानसिकरूपले स्वस्थ हुनको लागि तीनपटक लामो स्वरमा 'ॐकार'को ध्वनि उच्चारण गर्नुहोस् । यसपछि हात जोडेर निम्न मंत्रबाट प्रार्थना गर्नुहोस् ।

**ॐकारेश्वराय नमः, मम शान्ति त्वां स्वच्छ प्राप्ति निमित्तं, मम मन वचन कर्मणा त्वां पूर्णतः शुद्ध, पवित्र, दिव्य, चैतन्य प्राप्ति निमित्तं, मम समस्त शरीरे सतां पूर्वा एतोऽस्मानं मस्तिष्क रूपेण, नख, शिख पर्यन्तं पादयोः, पूर्णतः शुद्ध, सात्विक, पवित्र, चैतन्य, दिव्य त्वां तुभ्यं संपर्ददे ।**

**गुरु स्थापन**

परमपूज्य सद्‌गुरुदेवहरूलाई हृदयमा विराजमान हुनुहोस् भनी हात जोडेर प्रार्थना गरौं ।

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् पर ब्रह्म तस्मै श्री गुरुवे नमः ॥**
**ध्यान मूलं गुरो र्मूर्तिः पूजा मूलं गुरोः पदम् ।**
**मंत्र मूलं गुरुर्वाक्यं मोक्ष मूलं गुरोः कृपा ॥**
**मूकं करोति वाचालं पंगुं लंघयते गिरिं ।**
**यत् कृपा तमहं वन्दे परमानन्द माधवम् ॥**
**श्री गुरु चरणकमलेभ्यो नमः प्रार्थनां समर्पयामि ।**
**श्री गुरुं मम हृदये आवाहयामि**
**मम हृदय कमलमध्ये स्थापयामि नमः ।**
**तत्रादौ आसनं त्वां पूर्वत ऐतोऽस्मानं**
**गुरु पादुकां स्थापयामि नमः ।**

परमपूज्य सद्‌गुरुदेवहरूलाई आसनको लागि पुष्पदल (केसरा छुटाएर) अर्पण गर्नुहोस् तथा तीन आचमनी जल चढाउनुहोस् ।

**पाद्य**

ॐ **पाद्यं ते पूर्वाहं सतामहं स कृते एतोऽस्मानं स पूर्वाः तुभ्यं संपर्ददे । पाद्यं समर्पयामि नमः, पाद्यान्ते अर्घ्यं समर्पयामि नमः ।**

**अर्घ्य**

कुंकुमादि गन्ध, पुष्प सहितको अर्घ्यजल समर्पित गर्नुहोस् ।

**पाद्यान्ते कुंकुमपुष्पैः सह अर्घ्यं समर्पयामि नमः । तत्रादौ आदर सत्कार रूपेण गुरुम् आवाहयामि, अर्घ्यं समर्पयामि नमः ।**

**आत्मशुद्धि**

आत्म शुद्धिको लागि दायाँ हातमा जल लिएर निम्न मंत्रोच्चारण गर्दै तीनपटक जल पिउनुहोस् ।

ॐ **नारायणाय नमः ।** ॐ **केशवाय नमः ।** ॐ **गोविन्दाय नमः ।** यसपछि हात धुनुहोस् ।

**पादुका स्थापन**

गुरु पादुका स्थापनापश्चात् फूलको आसन अर्पण गरौं ।

**एतोऽस्मानं सः तां पूर्वाह एतोऽस्मानम् पूर्ण मन, वचन, कर्मणा पादयोः पादुकां स्थापयामि नमः । गुरु पादुकां स्थापयामि नमः ।**

**संकल्प**

दाहिने हातमा जल, फूल र कुंकुमादि गन्ध लिएर संकल्प गर्नुहोस् ।

ॐ **विष्णु र्विष्णु र्विष्णुः श्रीमद्‌भगवतो महापुरुषस्य विष्णोराज्ञया प्रवर्तमानस्य अद्य श्री ब्रह्मणोऽह्नि द्वितीयपरार्धे श्वेत वाराहकल्पे जम्बू द्वीपे मम मन वचन कर्मणां पूर्णता प्राप्ता निमित्तं गुरु पूजनान्ते तेषां महालक्ष्मीं आवाहयामि येषां स कृते कल्याण त्वां एतोऽस्मानं धन धान्य यश प्रतिष्ठा ऐश्वर्य अभिवृद्धये मम पूर्णतः पदोन्नति प्राप्ताय निमित्तं सर्व सुख प्राप्ति निमित्तं आध्यात्मिक उन्नति प्राप्ताय निमित्तं सिद्धाश्रम ऋषि मुनि आशीर्वाद प्राप्ताय निमित्तं मम मन वचन कर्मणां पूर्णतः गुरु चरणारविन्दं समर्पयामि । त्वां एतोऽस्मानं सा तव चरणे मम अमुक गोत्रोत्पन्नोऽहं** (आफ्नो गोत्रको उच्चारण गर्नुहोस्) **अमुक शर्माऽहं** (आफ्नो नाम उच्चारण गर्नुहोस्) **गुरु चरणारविन्दे जल साक्षीरूपेण समर्पयामि नमः ।**

जल भूमिमा छोडिदिनुहोस् र पुनः हात जोड्नुहोस् ।

**आवाहन प्रार्थना**

**गुरुर्वै सदान्यं परमं पवित्रं ब्रह्मस्वरूपं चैतन्य रूपम् ।**
**रुद्र स्वरूपाय विष्णुर्वदान्यै गुरूपादुकायां परिपूजयामि ॥**
**त्वं ब्रह्म रूपं त्वं देव रूपं आशीर्वादं भवतं सदैवं ।**
**क्रियमाण रूपं मम कार्य सिद्धिं गुरूपादुकां परिपूजयामि ॥**
**देवज्ञ चैतन्य भगवत् स्वरूपं सर्वत्र कार्य विजयं भवेच्च ।**
**आशीर्वादं पूर्वत एव नित्यं गुरूपादुकायां भवतं प्रणामि ॥**
**सिद्धाश्रमोऽयं ऋषितुल्य देवं मम साधयेत त्वं गुरुत्वं सदैव ।**
**परमं गुरु परमात्मरूपं गुरुश्च गुरूपादुकायां भवतं प्रणामि ॥**
**आवाहयामि ऋषिमुनि सिद्धाश्रम च आवाहयामि ।**
**सर्वत्र देवं दैवज्ञ्च रूपं आवाहयामि गुरु पादुकानि ॥**
**तत्रादौ समस्त ऋषि मुनि सिद्ध गंधर्व यक्ष किन्नर पूर्णतः**

**सिद्धाश्रम स्थित परम गुरु परमात्म गुरु, पारमेष्ठि गुरु, परमपरमात्म गुरु, श्री सच्चिदानन्द सहिताय समस्त ऋषि मुनि आवाहयामि मम अमुक गोत्रोत्पन्नोऽहं** (आफ्नो गोत्र उच्चारण गर्नुहोस्, गोत्र थाहा नभए जाति उच्चारण गर्नुहोस् ) **अमुक शर्माहं** (आफ्नो नाम उच्चारण गर्नुहोस्) **मम पूर्ण मन वचन कर्मणां शुद्धाय निमित्तं त्वां गुरु चरणारविन्दे मम गुरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज तेषां चरणपादुकां पूजयामि नमः ।**

तीनपटक जलद्वारा (आचमनीमा जल लिएर) प्रदक्षिणा गरी जल भूमिमा छोडिदिनुहोस् । हातमा पुष्प लिएर गुरुदेवहरूलाई आह्वान गर्नुहोस्, साथै समस्त दिक्-दिगन्त पूर्व पश्चिम, उत्तर, दक्षिण, यम, अग्नि, ईशान, वायव्य, नैऋत्य, अंतरिक्ष र पाताल दशै दिशामा जति

# नागिनले विदा

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं । कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ । यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ । यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ ।**

...तर म अप्ठ्यारोमा परेँ । अब के गर्ने ? कहाँ जाने ? कुनै निर्णय गर्न सकिन । त्यो ठाउँ त छोड्ने तर अर्को ठाउँ कहाँ जाने भन्ने थाहा नलागेसम्म बिलखबन्दमा परिँदोरहेछ । म त्यस्तै अवस्थामा परेँ । खाली ठाउँ त हो नि भनेर जथाभावी बस्न, हिँड्न नहुने किनकि खाली ठाउँमा पनि कैयौँ ऋषिमुनिहरू, योगीहरू अदृश्य भएको खण्डमा विभिन्न अनावश्यक झंझट आइपर्ने हुन्छ । ऋषिमुनिहरूको श्रापको चपेटामा परिने हुन्छ । जति माथि हुँदै गयो, उति नै मात्रामा ब्रह्माण्डका विभिन्न नीति-नियमले तल पुऱ्याइदिँदा रहेछन् । नियम र अनुशासनको पालना गर्दागर्दै आफ्नो उच्चताको आभास नै नहुने रहेछ ।

यस्तै-यस्तै प्रकारका विषयवस्तुउपर छानबिन गर्दागर्दै म सचेतताभित्रको अचेततामा पुगिसकेको मलाई पत्तै भएन । तिनले (नागिनले) सम्बोधन गरेर बोलाएपछि मात्र म झस्याँङ्ग हुन पुगेँ । तिनले त्यहाँबाट अन्यत्र प्रस्थान गर्नका लागि संकेत गरिन् । त्यसपछि हामी त्यहाँबाट निस्कियौँ । प्रत्येक पल-पल कति महत्त्वपूर्ण हुन्छ, हामी त्यहाँबाट छुट्ने समय अनि कसैको लागि यही ठाउँ (स्थान) जुट्ने समय । यस क्रमबाट हेर्दा कसैको संयोग कसैको वियोगबाट सृजित हुनेरहेछ । त्यही संयोग र वियोगको सट्टापट्टा हुने समय नआउन्जेल विभिन्न निहुँ र बहानामा कल्पना, वार्तालाप, घटना, उपघटना घटित भएर समय पार हुने रहेछ ।

एउटा अति रमणीय स्थल आइपुग्यो । तर त्यस ठाउँमा पुग्नको लागि हामी यही स्वरूपबाट समर्थ थिएनौँ । कारण बीचमा खाली तह थियो । त्यहाँ पुग्नको लागि कुनै माध्यम पनि थिएन । साथै अदृश्य भएर जानको लागि पनि त्यस बीचको तहमा खराब किरण मिश्रित थियो । त्यस घडीमा एउटै विकल्प थियो– सूक्ष्म शरीरद्वारा एक ठाउँबाट अर्को ठाउँमा प्रकट हुने । यस्तो सिद्धि जोसँग छ, ऊ मात्र त्यहाँ पुग्न सक्दछ अन्यथा आइपर्ने झंझट भोग्नु सिवाय अरु केही विकल्प छैन । मसँग त्यस्तो प्रकारको सिद्धि त के, मैले त्यस्ता खालका शक्ति हुन्छन् भन्नेसम्म पनि थाहा पाएको थिइन । म अकमक्क परेँ । तिनले (नागिनले) भनिन्– 'मसँग यस्तो प्रकारको शक्ति त छ तर हामी दुवैजना कसरी त्यहाँ पुग्ने ? त्यो ठाउँमा पुगेर तिमीले एउटा अनमोल साधना सम्पन्न गर्नुपर्छ ।' जब तिनले यसप्रकारबाट व्याख्या गरिन् मलाई अत्यन्तै तीव्र इच्छा जागेर आयो । शीघ्रातिशीघ्र त्यहाँ पुग्न पाए हुन्थ्यो र त्यसपछिको परिणामको निकट पुग्न पाए हुन्थ्यो भन्ने प्रबल भावनाले

जरो गाड्न थाल्यो ।

म उपायको खोजीमा लागेँ । अन्त्यमा एउटा जुक्ति आयो । त्यो जुक्ति के थियो भने 'सूक्ष्म शरीरबाट एउटैमा गाभिने अर्थात् तिनको (नागिनको) सूक्ष्म शरीरमा मेरो सूक्ष्म शरीर मिलेर एउटै बन्ने प्रक्रिया ।' जब हाम्रो शरीर एउटै बन्दछ तब त्यस शरीरमा मेरो अस्तित्व क्षीण (न्यून) रहन्छ । बाँकी सम्पूर्ण तिनको (नागिनको) हुन्छ । यसरी एउटै शरीर बन्ने प्रक्रियामा तिनको (नागिनको) जस्तो स्वभाव छ मेरो पनि त्यस्तै स्वभाव हुनुपर्ने रहेछ । तिनी जस्तो प्रकृतिकी छिन्, म पनि त्यस्तै प्रकृतिको हुनुपर्ने रहेछ, यदि गुणमा बिमेल (मेल नभएको) भएमा रंग फरक पर्ने रहेछ । तिनले चाहेको जस्तो नहुने रहेछ । वास्तविक समर्पणको अर्थ र महत्त्व मैले यहीँ आएर बुझ्ने मौका पाएँ । गुरुदेवले बारम्बार गुरूप्रति समर्पण हुनुपर्छ भनेर सम्झाउनुभएको, भन्नुभएको, बुझाउनुभएको कुरा बल्ल बुझ्ने मौका पाएँ । शिष्य गुरुमा विसर्जित हुने प्रक्रिया र त्यसपछि प्राप्त हुने परिणामको महत्त्व बल्ल बुझ्ने मौका पाएँ । अनेकबाट एक बन्ने प्रक्रियाको जन्म यहीँबाट शुरु भएको रहेछ । अनेक भावबाट एक भाव बन्ने रहेछ, हुनेरहेछ ।

जब म तिनमा विसर्जित भएँ तब तिनले क्षणभरमा नै आफ्नो सम्पूर्ण शरीर नै अलप गराइन् । म यी सबै कुरा थाहा पाउन सक्दथेँ । तर मेरो शरीर नभएको कारण व्यक्त गर्न सक्दैन थिएँ । तिनले जे इच्छा गर्थिन्, मैले त्यही इच्छामा रम्नु (रमाउनु) पर्थ्यो । तर भित्रबाट प्रेरित गर्न चाहिँ म स्वतन्त्र थिएँ । म तिनको मद्दतबाट यस ठाउँमा आउन सफल भएँ । तर मेरो पूर्ण शरीर प्रकट नहुन्जेल मैले धैर्य गर्नु सिवाय केही उपाय पनि थिएन । मेरो चाहना छिटोभन्दा छिटो सूक्ष्म शरीरमा प्रकट भई बाँकी कार्य पूरा गर्ने थियो । तिनको इच्छा केही समय त्यही ठाउँमा ध्यानस्थ (ध्यानमग्न) हुनेरहेछ । तिनी ध्यानमा गइन् र मलाई पनि ध्यानमा जान कर लाग्यो ।

हाम्रो शरीर एउटै थियो तर सूक्ष्म शरीरभित्र म अति सूक्ष्म शरीरमा रहनुपरेको थियो । तिनी सूक्ष्मको माध्यमबाट अति सूक्ष्ममा प्रवेश गरिन् । त्यही मौकामा म अति सूक्ष्मबाट सूक्ष्ममा बाहिर आएँ । तर हामीमा कुनै भेद आएन । जसरी तिनलाई सूक्ष्मबाट अति सूक्ष्ममा जान मन लाग्यो, त्यसैगरी मलाई पनि सूक्ष्मबाट अति सूक्ष्ममा जान मन लाग्यो । यसरी हाम्रा इच्छाहरू एउटै बन्न पुगेछन् । कहिले म अति सूक्ष्म बन्दथेँ । कहिले तिनी अति सूक्ष्म बन्दथिन् । यस्ता क्रमबाट हाम्रो समय बितेको पत्तै भएन । हामी एक-अर्कामा पूर्ण भए जस्तो लाग्यो । हामी पालैपालो होइन, एकैपटकमा अति सूक्ष्म र एकैपटकमा सूक्ष्म शरीर धारण गर्न सक्ने भयौँ । यसबाट हामी दुवैमा दुवैका गुणहरू सरेछन् अर्थात् बीजारोपण भएर देह सिद्धि भइसकेको हामीलाई पत्तै भएन । तिनमा भएको सिद्धि मलाई प्राप्त हुन आएछ । त्यसैगरी ममा भएको सिद्धि-शक्ति तिनलाई प्राप्त हुन पुगेछ । यसरी एउटा देहमा अर्को देहको मिलन हुन जाँदा दुवै देहलाई फाइदा पुग्ने रहेछ । त्यसैले त परमपूज्य सद्गुरुदेवले आफ्ना समस्त शिष्यगणलाई आफूमा मिलाउन खोज्नु हुँदोरहेछ, एकै झट्कामा आफ्ना शिष्य पनि क्षमतावान् बनून् भनेर ।

यस प्रकारको प्रक्रिया पूरा भएपछि हामी फेरि दुईवटा सूक्ष्म शरीरमा रूपान्तर भयौँ । तिनी पनि अति खुशी थिइन् । त्यस्तै म पनि अति खुशी थिएँ । हामी दुवैजना यति खुशी भयौँ कि यहाँ व्यक्त गरेर साध्य छैन । क्षणभरमा हराएर क्षणभरमा प्रकट हुन सक्ने विद्यालाई 'क्षणात् सिद्धि विद्या' भनिँदोरहेछ । श्रापोद्धारजस्तै 'क्षणात् सिद्धि विद्या'को पनि विराट् कार्यक्षेत्र रहेछ । त्यस्तै यसको प्रयोग विधि, महत्त्व आदिबारे व्याख्या गर्नको लागि प्रयोगात्मक क्षेत्रको आवश्यकता पर्ने रहेछ । मैले सोच्नै सकेको छैन । के यो सत्य हो ? के यो क्रम हो ? अर्थात् यो के हो त ? मलाई तिनले अलि वर बोलाइन् र 'क्षणात् सिद्धि शक्ति'को बारेमा ज्ञान हासिल गर्नका लागि र त्यसको महत्त्व एवं प्रयोगको बारेमा सम्पूर्ण कुरा बताउनका लागि अनुरोध गरिन् । म सम्पूर्ण वृत्तान्त बताउन सफल भएँ । वास्तवमा 'क्षणात् सिद्धि'को क्षेत्र विराट् रहेछ । यसका रूपहरू लाखौँ रहेछन् । क्षणभरमा नै प्राप्ति गर्ने प्रक्रियालाई 'क्षणात् प्राप्ति', क्षणभरमा उत्पन्न हुन सक्ने प्रक्रियालाई 'क्षणात् प्रकटीकरण', वस्तुलाई परिवर्तन गराउन मिल्ने प्रक्रियालाई 'क्षणात् परिवर्तन रूप' आदि-आदि दीक्षाको माध्यमबाट अनेकौँ प्रकारका कलाहरू आत्म शरीरमा थप्न मिल्ने रहेछ । यी सम्पूर्ण प्रक्रिया पूर्ण गर्नका लागि मैले अझ धेरै तपस्या गर्न बाँकी नै थियो । जब समय आयो, मैले सूक्ष्म संकेतको माध्यमबाट तपस्यामा लीन हुने कुरा अनुभूति गरेँ र सोहीअनुसार प्रक्रियाबद्ध भएँ । तप शक्तिको बारेमा मैले बुझ्ने मौका यहीं आएर पाएँ । प्रत्येक क्षण कति महत्त्वपूर्ण हुने रहेछ । हामी अलग-अलग रूपबाट तपस्यामा मग्न भयौँ । मेरो सूक्ष्म शरीर निराकारमा परिणत भयो र प्रकाश तत्त्वबाट आकाश तत्त्वमा गई मिल्यो ।

निराकार ब्रह्म र साकार ब्रह्मको सार वास्तवमा एउटै जस्तो लाग्यो तर एउटै चाहिँ होइन रहेछ । आकार नहुनेले आकारको रूप लिने, फेरि आकार हुनेले आकारलाई विलीन गराउने । यी सबै प्रक्रिया वास्तवमा परब्रह्मकै लीलाजस्तो लाग्यो । स्थूल शरीरबाट सूक्ष्म शरीरमा परिणत हुँदा केही शरीरगत मोहले पनि काम गर्नेरहेछ । तर सूक्ष्म शरीरबाट अतिसूक्ष्म शरीर झन् अर्को रूपमा गएपछि त मोह भनेको के हो परिभाषित नै गर्न गाह्रो हुने रहेछ । त्यही भाव साधक-साधिकाको शरीरमा आयो भने, व्यक्तिमा आयो भने योगी स्वरूप बन्दोरहेछ, वैराग्य आउने रहेछ र संसार मिथ्या हो भन्ने रहेछ । वास्तवमा संसार मिथ्या पनि छैन, अमिथ्या पनि छैन । बरु यसलाई सञ्चालन गर्न सक्ने क्षमताको भने विकास गर्नुपर्ने हुन्छ । यी सबै कुराको निचोड निराकार ब्रह्ममा छिपेको छ र निराकार ब्रह्म साकार ब्रह्मभित्र छिपेको छ ।

आत्माको अस्तित्व शरीरले गरिदिन्छ अर्थात् आत्माबिना शरीरको अस्तित्व छैन र शरीरबिना आत्माको अस्तित्व पनि छैन । त्यसैगरी निराकार ब्रह्म र साकार ब्रह्मको पनि भेद बुझ्नुपर्ने हुन्छ । जसरी बाहिरबाट हेर्दा मानव शरीर मात्र देखिन्छ । तर मानव

शरीरलाई छुट्याएर हेर्न थाल्यौँ भने विभिन्न अंगहरू हात, गोडा, पेट, छाती, गर्दन, आँखा आदि भिन्न-भिन्नरूपमा पाउँछौँ र ती सबै मिलेर मानव देह बनेको हुन्छ । त्यसैगरी, मनुष्य शरीरभित्र बसेको आत्म शरीर एउटा पाउछौँ तर यस आत्म शरीरलाई केलाएर हेर्‍यौँ भने यसभित्रका रोचक पक्ष, अनेकौँ अंग, प्रत्यंग आदिले भरपूर यस अद्भूत आत्म शरीरको व्याख्या कलमबाट गर्न नसकिने हुँदोरहेछ । मैले त केवल जति अनुभूति गर्न सकेँ, त्यसको ज्यादै थोरै भाग, त्यसमा पनि मैले भाषागतरूपमा उल्था गर्न सक्ने मात्र इंगित गरेको हुँ ताकि यसबाट धेरै प्रेरणा लिन सकियोस् ।

एउटा सियोको टुप्पामा लाखौँ आत्म शरीरहरू अट्न सक्दारहेछन् । एउटा आत्म शरीरले विराट् स्वरूप धारण गर्दा विश्व ब्रह्माण्ड ढाक्ने हुँदोरहेछ । कस्तो अचम्म ! सारा संसारमा प्रलय हुँदा सम्पूर्ण सूक्ष्म शरीर (आत्म शरीर) अति सूक्ष्ममा परिणत हुँदारहेछन् । एउटा सूक्ष्म शरीरमा लाखौँ-लाख अति सूक्ष्म शरीर अट्ने रहेछन् । कल्पना गर्न पनि गाह्रो लाग्ने विषय हो यो । सबै प्रकारका विद्याहरू, दिव्य शक्तिहरू, अति सूक्ष्मभन्दा पनि भित्र रहेर संसारमा विचरण गर्ने रहेछन् जसको मनुष्य देहले त पारख नै गर्न सक्दो रहेनछ । हामीले अखण्ड मंत्र स्मरण गर्दा कता-कता मंत्रको ध्वनिको तरंगले ती दिव्यतम रश्मिलाई झट्का दिने हुँदोरहेछ र हामीलाई कता-कता आभास मिल्ने हुँदोरहेछ । त्यसैको प्रभावबाट अति सूक्ष्म शक्ति प्राप्त हुने र अन्तमा सूक्ष्ममा परिणत भई हामीलाई लाभ प्राप्त हुनेरहेछ । आत्म शरीरको विराट् स्वरूपको व्याख्या वास्तवमा शब्दमा गर्नै सकिँदैन । यो त केवल अनुभूति हो, यसलाई त्यो व्यक्तिले बुझ्न सक्दछ जो क्षमतावान् छ र त्यो तहसम्म पुग्नका लागि हामीले धेरै गुरु परीक्षा पार गर्नुपर्ने हुन्छ, कैयौँ उतार-चढावको सामना गर्नुपर्ने, सत्य र असत्यको बीचबाट गुज्रनुपर्ने, सम्मान र अपमानको बीचबाट गुज्रनुपर्ने रहेछ, ज्ञान र अज्ञानको बीचबाट त्यस तत्त्वको पारख गर्न सक्ने क्षमताको विकास गर्नुपर्ने हुँदोरहेछ । क्षमता बनाउन सकेको खण्डमा ब्रह्माण्डमा रहेका करोडौँ दिव्य शक्ति एउटै स्थूल शरीरमा पनि समावेश गर्न सकिँदो रहेछ । त्यस्तो गर्नका लागि तपस्याको जरुरत पर्ने रहेछ । तपस्याको माध्यमबाट कैयौँ असम्भव विषयवस्तु पनि सहज र सरल रूपबाट प्राप्त गर्न सकिँदो रहेछ ।

यसरी ज्ञानको महासागरमा डुब्दै जाने क्रममा आत्मानन्द प्राप्त भइरहेको थियो । म ज्ञान गंगामा चुर्लुम्म डुब्दै भित्रभित्रै गइरहेको थिएँ । अकस्मात् मलाई बोलावटको आभास भयो । आत्मामा यति क्षमता हुँदोरहेछ कि यस अनन्त ब्रह्माण्डको जुन कुनामा भए पनि कसैले सम्झियो भने तुरुन्त थाहा हुँदोरहेछ र तत्क्षण त्यो ठाउँमा सूक्ष्म शरीरको माध्यमबाट प्रकट हुन सकिँदो रहेछ । यसै शक्तिलाई 'क्षणात् प्रकटीकरण' भनेर परिभाषित गरिँदो रहेछ । म यही विद्याअनुसार बोलावट भएको ठाउँ सम्झेर तुरुन्त प्रकट हुन सक्षम भएँ । मलाई अचम्म लागिरहेको थियो– यस्तो पनि गर्न सकिँदोरहेछ । नयाँ ठाउँको वातावरणमा घुलमिल हुन केही समय लाग्यो । मलाई बोलाउने तिनै नागिन रहिछिन् । मलाई अत्यन्त रमाइलो लागिरहेको थियो । उनले गरेका सम्पूर्ण सहयोग सम्झेर म मग्न भइरहेको थिएँ ।

तिनी आज नागिनको स्वरूपमा नभई एउटी भर्खरकी युवतीको रूपमा थिइन् । उनको त्यो विशिष्ट शृंगार, अत्यन्त मनमोहक स्वरूप पहिलेभन्दा ज्यादै मौन थियो । मैले बुझ्न सकिरहेको थिइन किनकि तिनले आफ्नो वास्तविक स्वरूप मलाई बताइनन् । तिनीसँग कति क्षमता छ, त्यो पनि मलाई थाहा भएन । ममा कुनै प्रकारका तरंगहरू थिएनन् । मैले विनम्रतापूर्वक बोलाउनुको कारण सोधेँ । तिनले भनिन्– 'अब म आफ्नै ठाउँमा फर्कँदैछु, मेरो समय हुन लाग्यो । अब तिमी सूक्ष्मताको माध्यमबाट जहाँ पनि प्रकट हुन सक्ने भयौ, म खुशी छु । तर तिमी आफ्नो इच्छाले कहीँ पनि प्रकट नहुनु, अरुले बोलायो भने मात्र प्रकट हुनू । कसैले नबोलाएको बेलामा तपस्यामा लीन हुनू । म मेरो वास्तविक लोकमा पुगेपछि तिमीलाई अवश्य बोलाउनेछु ।'

त्यसपछि मात्र मलाई थाहा भयो कि आज तिनी मबाट अलग हुँदैछिन् । मैले केही पनि प्रत्युत्तर दिइन । तिनले पुनः भनिन्– 'तिमीले मलाई आवाहन नगर्नू । केवल तपस्यामा लाग्नू । समय आएपछि तिमीलाई अर्को लोकमा आउनको लागि म बोलाउनेछु । त्यतिबेला मात्र तिमीले मलाई भेट्न पाउनेछौ । अब मेरो जाने बेला भयो, म बिदा भएँ ।' यति भनेर तिनी त्यहीँबाट बिलाइन् । म अकमक्क परेँ । आत्मा-आत्माको बीचमा पनि आनन्द प्राप्त भए जस्तै वैराग्य पनि हुँदो रहेछ । त्यही वैराग्यभित्रबाट रागको जन्म हुँदोरहेछ । ममा पनि त्यही भयो । कहिले तिनी आफ्नो लोकमा पुग्नेछिन् र मलाई बोलाउने छिन्, त्यस लोकको नाम के होला, त्यहाँ कस्ता-कस्ता रीत (विधान) होलान्, कसरी पहिचान गर्ने होला भन्ने विषयवस्तु ममा आउन थाले । यसो गर्नुभन्दा त तपस्यामा डुब्नु बेस होला भनी म तपस्यामा लीन भएँ ।

म भित्रभित्रै डुब्दै गएँ । एकपछि अर्को ज्ञान फुरेर आउन थाल्यो । विशाल आकाशगंगामा करोडौँ-करोड आत्म शरीरहरू आ-आफ्नै ढंगबाट तपस्यामा लीन भएको पाउँदा यो सारा ब्रह्माण्डमा तपस्या गर्ने बाहेक कोही छैन कि जस्तो लाग्यो । मनुष्य सत्ता त साह्रै तल्लोजस्तो लाग्यो । यसरी आत्माले बाहिरी विचित्र संसारको पारख लिन थालेपछि मनुष्य देह त्याग्न किंचित पनि पीर नमान्ने रहेछ । आफ्नो तप शक्तिले भ्याएसम्म आत्मप्रकाशको माध्यमबाट कैयौँ नयाँ ठाउँ पत्ता लगाउन सकिँदो रहेछ । तर त्यहाँ पुग्नको लागि अनुमति भने चाहिने रहेछ । यसरी म डुब्दै गएँ । कति समय भयो, थाहै भएन । त्यसैबेला मलाई कारुणिक स्वरमा कतैबाट बोलावट आयो । मैले तुरुन्त उक्त स्वर चिनिहालेँ । म त्यस ठाउँमा जानको लागि आफ्नो विद्यालाई स्मरण गर्दै थिएँ । तुरुन्त रूप...क्रमशः ।

जय गुरुदेव !

# आश्रम गतिविधि

## मासिक हवन कार्यक्रम

गत वैशाख २ गते सोमबार पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा श्री शिव गोरक्ष हवन सम्पन्न भयो । उक्त हवन बिहान ८ देखि ९ बजेसम्म सञ्चालन भएको थियो ।

त्यस्तै, वैशाख ३ गते मङ्गलबार ललितपुरको लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन सम्पन्न भयो । उक्त हवन बिहान ७-८ बजेसम्म चलेको थियो । हवनमा सहभागी हुनेहरूले उक्त दिन कुकुरलाई खानेकुरा दिनुपर्ने र पिट्न नहुने नियम छ ।

त्यसैगरी, वैशाख ४ गते बुधबार बिहान ८-९ बजेसम्म ललितपुरको लगनखेलस्थित महालक्ष्मी मन्दिर परिसरमा तान्त्रोक्त महालक्ष्मी हवन सम्पन्न भयो। उक्त हवनमा सहभागीहरूले दिनभरि रिसाउन नपाउने नियम छ ।

गत वैशाख ५ गते बिहीबार लगनखेलको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवन बिहान ८–९ सम्म सञ्चालन भएको थियो ।

### नववर्षमा भजन कीर्तन

सिद्धाश्रम शक्ति केन्द्रले अन्य कार्यक्रमहरूमा जस्तै नववर्षारम्भ अर्थात् वैशाख १ गतेलाई भजन-कीर्तनका साथ मनाएको छ। बेलुकी ४ बजे स्तुति-वन्दनाका साथ शुभारम्भ भएको कार्यक्रम बेलुकीसम्म चलेको थियो ।

### आरती सञ्चालन केन्द्र थपियो

सिद्धाश्रम शक्ति केन्द्रको चौतर्फी विस्तार सँगसँगै यसका प्रचार प्रसार केन्द्रहरूको पनि ठाउँ ठाउँमा स्थापनाको क्रमले तीब्रता पाइरहेको छ ।

काठमाडौँको नयाँबजारमा आरती सञ्चालन केन्द्र खुलेको छ । गत वैशाख ६ गतेदेखि खुलेको उक्त आरती सञ्चालन केन्द्रमा सोही दिनदेखि गुरु आरती शुरु भइरहेको छ ।

त्यस्तै, गत वैशाख ९ गते अवतरण दिवसको पावन अवसरको दिनमा काठमाडौँको म्हेपिमा सिद्धाश्रम शक्ति केन्द्रको प्रचार प्रचार केन्द्र (Contact Point) खुलेको छ । हाललाई साँझ ४ बजेदेखि ६ बजेसम्म खुल्ने उक्त प्रचार प्रसार केन्द्रमा सोही दिनदेखि नियमित गुरु आरती शुरु भएको छ ।

**भूल सुधार**
गताङ्कको मध्यपृष्ठमा चैत्र ८ हुनुपर्नेमा अन्यथा भएको हुनाले सच्याइएको छ ।

## विद्याश्रमको वार्षिकोत्सव

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले आफ्नो स्थापनाको तेस्रो वर्ष पूरा गरी चौथो वर्षमा पदार्पण गरेको अवसरमा गत वैशाख ५ गते विद्याश्रमको वार्षिकोत्सव कार्यक्रम सम्पन्न भयो । स्तुति वन्दना, प्रार्थनाका साथ शुरु भएको कार्यक्रममा गुरु पादुकाको दिव्य पूजन सम्पन्न भएको थियो ।

कार्यक्रममा स्वागत मन्तव्य शिक्षिका सुषमा देवकोटाले गर्नुभएको उक्त कार्यक्रममा विद्याश्रमका विद्यार्थी भाइबहिनीहरूले राष्ट्रिय गीतसहित भजन, नृत्य, गीत, क्यारिकेचर, कविता, नाटक, फेशन शो पनि प्रस्तुत भएका थिए। कार्यक्रममा विद्याश्रमका प्रिन्सिपल र अन्यले बोल्नुभएको थियो। सावर पन्थी सदस्यहरूले पुरस्कार वितरण गर्नुभएको उक्त कार्यक्रममा नाथयोगीहरूको पनि सहभागिता रहेको थियो ।

## आध्यात्मिक नेतृत्वकर्ताको बाह्रौं तालिम सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रअन्तर्गत रहेका विभिन्न कार्यकर्ता तहहरुमध्ये आध्यात्मिक नेतृत्वकर्ता तहको बाह्रौं तालिम कार्यक्रम वैशाख २० र २१ गते सम्पन्न भएको छ। काठमाडौँको वसुन्धरामा रहेको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा सम्पन्न उक्त दुई दिवसीय तालिममा नेपाल अधिराज्यबाट छनौटमा पर्नुभएका कार्यकर्ताहरूमध्ये अनठाउन्न जनाको सहभागिता रहेको थियो। काठमाडौँ, ललितपुर, भक्तपुर, काभ्रे, कास्की, दोलखा, रुकुम, गोरखा, तनहुँ, लमजुङका कार्यकर्ताहरूको उक्त तालिममा सहभागिता रहेको थियो ।

बिहान १० बजेदेखि साँझ ५ बजेसम्म सम्पन्न उक्त कार्यक्रममा पूजन कसरी गराउने, कार्यकर्ता, समाज, रोट महोत्सव, सांगठनिक अवधारणा, नेपाल विश्वमा कसरी चिनिन सक्छ जस्ता महत्त्वपूर्ण विषयका साथै आध्यात्मिक चेतना स्तर र तपस्या बढाउने गूढतम् विषयवस्तुमा प्रशिक्षण भएको थियो ।

तालिमको प्रतिक्षित र रोचक विषयवस्तुअन्तर्गत रहेको ग्रेडिङ्गअनुसार यसपटक ५ जना कार्यकर्ताहरू गुरुसेवा दलमा पदोन्नत हुनुभयो ।सुन्दरराज आचार्य, भोजराज रेग्मी, भोजराज जोशी, सुषमा लामिछाने, मिनु सिग्देल गुरुसेवा दलमा प्रवेश पाउन सफल हुनु भएको छ । सा.प.नं. १, ३ र सा.मा. ४ ज्यूले पदोन्नत कार्यकर्ताहरूलाई टीका र माला लगाई बधाई ज्ञापन गर्नुभएको थियो भने उक्त क्षणमा संगीतको मधुर ध्वनि र तालीको गडगडाहटले तालिमस्थल लामो समयसम्म गुञ्जन पुगेको थियो ।

उक्त कार्यक्रममा पहिलो दिन शान्ता राई, सुलोचना वानिया, मधुमति रंजित र आरती सुनुवारले दिव्य गुरु पादुकाको पूजन गर्ने सौभाग्य पाउनु भएको थियो भने दोस्रो दिन पूजन गर्ने सौभाग्य पाउनु हुनेहरूमा गोपालप्रसाद सापकोटा, शारदा कमर, विमला प्याकुरेल हुनुहुन्थ्यो ।

# परमपूज्य सद्‌गुरुदेवको ७५ औं अवतरण दिवस

सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको ७५ औं अवरतरण दिवस तथा सिद्धाश्रम शक्ति केन्द्र स्थापनको नवौं वर्ष प्रवेशलाई गत वैशाख ९ गते वृहत्‌रूपमा मनाएको छ । गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्राङ्‌गणमा मनाइएको अवतरण दिवस परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज डा. नारायण दत्त श्रीमालीका रूपमा यस धरतीमा अवतरित हुनुभएको पुनीत दिनको सम्झनामा मनाइने गरिन्छ ।

बिहान ८:०० बजे स्तुतिवन्दना, प्रार्थना, निखिल स्तवनको सस्वर पाठबाट शुरु भएको अवतरण दिवसमा पूजन, मन्त्र जप, हवन, स्ववचन, भजन-कीर्तन, नृत्य, लक्ष्यदीप प्रज्ज्वलन, पुरस्कार वितरण, पोशाक वितरण, ध्यान आदिका कार्यक्रमहरू सम्पन्न भएका थिए भने वार्षिक प्रगति विवरण र अन्य गतिविधिलाई पढेर सुनाइएको थियो । मनु श्रेष्ठ, अनु श्रेष्ठ, शिशिर रेग्मी, शान्ता रेग्मी, मीना थापा, मिनबहादुर थापा, किशोर थापा, समीक्षा थापा, भोजराज रेग्मी, सुनिता रेग्मी, मधुमति रञ्जित, शारदा पुडासैनी र श्री अन्नपूर्ण पुष्टता युनिटले दिव्य पादुका पूजनको सौभाग्य पाउनु भएको उक्त कार्यक्रमको दोस्रो चरण गुरुसेवा दलका ५ नं.का सदस्य साधक प्रेम लामाको स्वागत मन्तव्यबाट शुरु भएको थियो ।

गत चैत्र २० र २१ गते सम्पन्न गुरुसेवा दलको तालिम कार्यक्रममा पदोन्नत कार्यकर्ताहरूलाई अवतरण दिवसको पावन अवसरमा सावर पन्थी सदस्य नं. १ र २ ज्यूले विभिन्न रङका पोशाक पहिऱ्याउनु भएको थियो । उक्त पोशाक वितरणमा इतिहासमै पहिलो घटनाका रूपमा लिइएको सावर मातृका तहको पोशाक प्रदान गरिएको थियो । सावर मातृकाजस्तो गरिमामय तहमा पदार्पण गर्न सफल हुनु भएकी सिशके प्रशासन तथा जनसम्पर्क विभागकी संयोजक साधिका विन्देश्वरी वरालज्यूलाई सावर मातृकाको पोशाक सापद्वयले प्रदान गर्नुभएको थियो ।

कार्यक्रममा पत्रिका सदस्यता विस्तारमा भाग लिएर १ सय जना पत्रिका सदस्य बनाएर शारदा पुडासैनीले विशेष पुरस्कार प्राप्त गर्नुभएको थियो भने ज्योति महर्जन र महेश्वर न्यौपानेले क्रमश: ५० जना सदस्य बनाएर विशेष धारण मालासहित गुरूफोटो उपहार पाउनुभएको थियो । कार्यक्रममा शारदा महर्जन, तुलसीमाया महर्जन, सुभद्रा श्रेष्ठ, दिपा अधिकारी, मुराहरि श्रेष्ठ, चन्द्रविक्रम शाह, गोविन्द राजथला, दिनकुमार के.सी., कुलबहादुर विष्ट, रमा सिम्खडा, जुना प्रजापति, अनिता वस्नेत, सविन प्रजापति, गोमा हाडा, ज्ञानेन्द्रप्रसाद श्रेष्ठ, सचित श्रेष्ठ, देवकी राउत, राधा न्यौपाने, रमेशकाजी श्रेष्ठ, मदनलाल श्रेष्ठ, सुषमा खड्का के.सी., तिला चुडाल, कविता के.सी., जयराम थापा, दलबहादुर श्रेष्ठ, टोपबहादुर बस्नेतले २० जना सदस्य बनाएर विशेष उपहार पाउनु भएको थियो ।

कार्यक्रममा सावर पन्थी सदस्य नं १ ज्यूले प्रवचन स्ववचनमार्फत चेतनाको विकासबाट मात्रै दिव्य शक्तिका दिव्य कुराहरू थाहा हुने बताउनु भयो । उहाँले चेतनाको विकास भएपछि ज्ञान र विज्ञानलाई बुझेर सूक्ष्म विश्लेषण गर्न सकिने बताउनु भयो । संसारमा सबैभन्दा ठूलो ज्ञान भएको हुनाले धेरै ज्ञान प्राप्त व्यक्तिहरूको नै समाजमा स्थान हुन्छ भन्ने विचार पनि उक्त कार्यक्रममा उहाँले व्यक्त गर्नुभएको थियो । उक्त अवसरमा विशेष ध्यान पनि प्राप्त भएको थियो । अवतरण दिवसको कार्यक्रममा सावर पन्थी सदस्य नं ३ ज्यूले देशमा भर्खर राजनैतिक रूपान्तरण भएको छ, अन्य रूपान्तरणहरू पनि हुँदै जालान्, यी सबै गोरक्ष निखिल युगका लागि अनुकूल वातावरण बन्दै गरेको बताउनु भयो ।

अवतरण दिवसकै पावन दिनदेखि काठमाडौंको पुरानो बानेश्वरमा रहेको आरती संचालन केन्द्र प्रस्तावित सम्पर्क कार्यालयमा रूपान्तरण भएको पनि घोषणा गरिएको थियो । साथै, परमपूज्य सद्‌गुरुदेवहरूबाट पोखरामा प्रत्येक महिनाको पहिलो बुधबार तान्त्रोक्त विन्ध्यवासिनी हवन गर्ने आदेश प्राप्त भएको कुरा पनि सार्वजनिक गरियो ।

उक्त अवतरण दिवसको कार्यक्रमलाई पोखराका साधक साधिकाहरूले पनि सुन्न सकिने गरी प्रत्यक्ष प्रशारण गरिएको थियो । उक्त कार्यक्रम औपचारिकरूपमा बेलुकी ५ बजे सिद्धिए पनि भजन-कीर्तन र नृत्य अबेरसम्म चलिरहेको थियो । साधक साधिकाहरू मस्तीसँग नाचेर आफ्ना परमआराध्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरण दिवसलाई हर्षोल्लास, उमंग र बडो जोश, जाँगरका साथ मनाइरहेका थिए । विशाल साधक साधिकाहरूको सहभागिता रहेको उक्त अवतरण दिवसमा संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूमा पनि उत्तिकै हर्षोल्लासपूर्वक मनाइएको थियो ।

# गुरुदेवसँगको पहिलो भेट

साधना पथमा अगाडि बढ्दै गर्नुभएका नारायणको सम्बन्धमा उहाँका गुरुभाइ स्वामी विज्ञानानन्द भन्नुहुन्छ–''प्रात:कालको समय थियो । मानसरोवरको निकट कैलाश पर्वतको शिलामा स्वामी निखिलेश्वरानन्द ध्यानस्थ थिए । चारैतिर हिउँ जमेको थियो । हिउँमा परिरहेको प्रात:कालको किरण सयौँ रूपमा श्रृंगार गरेर नृत्य गर्दै गरेको आभास भइरहेको थियो । त्यस शीतयुक्त वातावरणमा पनि ती योगी बीस दिनदेखि निर्विकल्प समाधिमा लीन थिए । एउटा लँगौटीका अतिरिक्त शरीरमा कुनै प्रकारको वस्त्र थिएन । गुरुको आज्ञा पाएर ब्रह्मत्व साधनामा लीन त्यस योगीको बारेमा स्वयं गुरुदेव स्वामी सच्चिदानन्दज्यू पनि चिन्तित हुनुहुन्थ्यो र मानसरोवरमा विचरण गर्नुहुँदै उहाँले मलाई यो हेर्नका लागि पठाउनुभएको थियो कि निखिलेश्वरानन्दलाई कुनै कठिनाइ त भइरहेको छैन ? म उनको त्यस उच्च एवं कष्टप्रद साधनालाई देखेर आश्चर्यचकित थिएँ । त्यस भयंकर शीतमा पनि उनले आफूलाई जसरी संयमित राखेका थिए, त्यो आफैमा अप्रतिम थियो । त्यो साधनाको अन्तिम चरण थियो । चारैतिर फैलिएको हिउँमा सूर्यका किरणहरूको नर्तन र अखण्ड शान्तिको वातावरण देखेर म भावविभोर थिएँ, अकस्मात् उनको शिरबाट हुँकारको ध्वनि प्रस्फुटित भयो, यस्तो लाग्यो कि शिरको बीचबाट एउटा विचित्र लप्का निस्केको छ र तत्क्षण नै त्यो ज्योतिपुञ्ज त्यसै शरीरमा प्रतिस्थापित भएको छ । उनको अनुहार एउटा विचित्र आभाबाट दैदीप्यमान भएको छ र उनका कमलवत् आँखा खुलेका छन् । सही अर्थमा उनलाई योगीहरूमा दुर्लभ र साधनाहरूमा कठिनतम साधना ब्रह्मत्व साधनामा पूर्णता र सिद्धि प्राप्त भएको थियो । मलाई सामु देखेर उनी भावविभोर भए । बीसौं दिनसम्म पनि एकै स्थानमा बस्नाले शरीरमा निर्बलता छाएजस्तो भएको थियो । उनी तत्क्षण उठे । जब मैले बताएँ कि पूज्य गुरुवर मानसरोवरको तटमा विचरण गरिरहनु भएको छ तब उनी भावविह्वल भए र मेरो हात समातेर तीव्र गतिमा त्यसतर्फ लम्किए जहाँ गुरुदेवलाई भेट्ने सम्भावना थियो । उनको शरीर ब्रह्मत्वबाट ओतप्रोत थियो

परमहंस स्वामी सच्चिदानन्द महाराज अलौकिक योगशक्तिका भण्डार हुनुहुन्थ्यो । संसारका कुनै पनि वस्तु उहाँका लागि अगम्य थिएन । प्रकृतिको सत्तासँग उहाँ एकीभूत पुञ्ज हुनुहुन्थ्यो । वायुमण्डलबाट उहाँ भौतिक वस्तुहरू उत्पन्न गर्नुहुन्थ्यो ।

र गुरुदेवलाई देख्नासाथ उहाँको चरणमा नतमस्तक भए । उनको शरीर कामिरहेको थियो, नेत्र आनन्दाश्रुबाट सिक्त थियो र अपूर्व सिद्धिबाट उनको रोम-रोम ज्योत्स्नित थियो । पूज्य गुरुदेवलाई असीम आनन्दको अनुभूति भइरहेको थियो कि उहाँका एकजना शिष्यले त्यस साधनालाई प्राप्त गर्न सफल भए जुन अद्वितीय छ । गुरुदेवले भावविभोर भएर उनलाई आफ्नो हृदयमा लगाउनुभयो । यस्तो लाग्यो, मानौँ दुई शरीर एकाकार भएका छन् । मानसरोवरको धर्तीमा गुरु शिष्यको यो मिलन दृश्य अनिर्वचनीय थियो ।"

परमहंस स्वामी सच्चिदानन्द महाराज अलौकिक योगशक्तिका भण्डार हुनुहुन्थ्यो । संसारका कुनै पनि वस्तु उहाँका लागि अगम्य थिएन । प्रकृतिको सत्तासँग उहाँ एकीभूत पुञ्ज हुनुहुन्थ्यो । वायुमण्डलबाट उहाँ भौतिक वस्तुहरू उत्पन्न गर्नुहुन्थ्यो ।

एकपटक सूर्यार्घ्य दिइरहँदा मेरो शंख खसेर टुक्रैटुक्रा भयो । मध्यान्हमा बाबालाई मैले प्रार्थना गरेँ । बाबाले एकछिन मलाई हेरिरहनु भयो र तत्क्षण नै आफ्नो हात माथि उठाएर वायुमण्डलबाट एउटा दक्षिणावर्ती शंख लिएर मलाई दिनुभयो ।

एकपटक गुरुदेवसँग मैले योगसँग सम्बन्धित प्रश्न गरेँ । योग के हो ? योगअन्तर्गत जुन समाधि हुन्छ त्यसको कस्तो आनन्द हो ?

गुरुदेवले भन्नुभयो–

चित्तवृत्तिहरूको निरोध योगको माध्यमबाट नै सम्भव छ ।

**अग्निर्यत्राभिमध्यते, वायुर्यत्राधिरुध्यते, सोमो यत्रातिरिच्यते, तत्र संजायते मनः ॥**

**त्रिरुन्नतं स्थाप्य समं शरीरं, हृदीन्द्रियाणि मनसा निवेश्य ।**
**ब्रह्मी जपन् प्रतरेत विद्वान्, स्रोतांसि सर्वाणि भयावहानि ॥**
**नीहारधूमार्कनिलानलानां, खद्योतविद्युत्स्फटिकाशशीनाम् ।**
**एतानि रूपाणि पुरः सराणि, ब्रह्मण्यभिव्यक्तिकराणि योगे ॥**
**पृथिव्यप्तेजो निलखे समुत्थिते, पंचाश्चके योगगुणे व्रवृत्ते ।**
**न तस्य रोगो न जरा न मृत्युः प्राप्तव्य योगाग्निमयं शरीरम् ॥**
**लघुत्वमारोग्यमलोलुपत्वं, वर्णप्रसादं स्वरसौष्ठवं च ।**
**गन्धः शुभो मूत्रपरीषमल्यं, योगप्रवृत्तिं प्रथमां वदन्ति ॥**
**यथैव विम्बं मृदयोपलिप्तं, तेजोमयं भ्राजते तत् सुधान्तम् ।**
**तद्वात्मतत्त्वं प्रसमीक्ष्य देही, एकः कृतार्थो भवते बीतशोकः ॥**

यसलाई स्पष्ट गर्नुहुँदै गुरुदेवले भन्नुभयो कि जहाँ अग्निको मंथन हुन्छ र प्राणको विधिवत् निरोध गरेर सोमरस प्रकट गरिन्छ, त्यही मन नितान्त पवित्र, शुद्ध एवं अकलुष हुन्छ । विद्वान् साधकको यो कर्तव्य हुन्छ कि त्यो आफ्नो शिर, कण्ठ र छातीलाई निरन्तर उठाइरहोस्, शरीरलाई निरन्तर सीधा र संयमित गर्दै रहोस् । मनद्वारा इन्द्रियहरूलाई हृदयमा निरोध गरेर प्रणव नौकाबाट जति पनि कठिन एवं भयावह स्थल छन्, त्यसलाई पार गरोस् । जो सच्चा योगी हो, उसको सामु कहिरो, धूवाँ, सूर्य, वायु, अग्नि, विद्युत, स्फटिक मणि र चन्द्रसमान अनेक दृश्य देखा पर्दै रहन्छन् र यी दृश्य योगको सफलताका लक्षण हुन् । पंचमहाभूतको उत्थान हुँदा पंचयोग गुण सिद्ध हुन्छ र यस्तो हुँदा साधक रोग, जरा एवं मृत्युबाट सधैँका लागि मुक्त हुन्छ । शरीर हलुका हुनु, आरोग्य भागहरूको निवृत्ति, वर्णोज्ज्वलता, स्वरसंधान, गंधमार्दन, मलमूत्र शिथिलीकरण यी सबै योगका प्रथमावस्था हुन् । जस्तो प्रकारले कुनै उज्ज्वल रत्न माटोको संसर्ग पाएर धमिलिएपछि त्यसलाई पुछ्दा पुनः चम्किन्छ, त्यसैप्रकार योगी आत्म तत्त्वलाई जानेर एकावस्थालाई प्राप्त गर्दछ । तब सबै क्लेशहरूबाट मुक्त हुन्छ । क्रमशः

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौं ।**

**मन्नाथः श्रीजन्नाथो**
**मद् गुरुस्त्रिजगद्‌गुरुः ।**
**मामात्मा सर्वभूतात्मा**
**तस्मै श्रीगुरवे नमः ॥१०३॥**

भावार्थ : समस्त जगत्‌का स्वामी, समस्त संसारलाई ज्ञान दिने, आत्मस्वरूपको बोध गराउने, समस्त प्राणीहरूमा जीवरूपमा अवस्थित श्री गुरुलाई म भावयुक्त हृदयदेखि नमस्कार गर्दछु। व्यक्तिले आफूभित्र निहित गुरुत्वलाई चिन्ने प्रयास गर्नुपर्दछ, उहाँप्रति नित्य विनम्र तथा श्रद्धायुक्त भइरहनु पर्दछ जसबाट ऊ कामनारहित होस् र आफ्ना दायित्वहरूलाई पूर्ण गर्दै आफ्नो मूल लक्ष गुरुसेवा गर्ने सुअवसर प्राप्त गर्न सकोस् ।

**यस्मात्परतरं नास्ति**
**नेति नेतीति वै श्रुतिः ।**
**मनसा वचसा चैव**
**नित्यमाराधयेद् गुरुम् ॥१०४॥**

भावार्थ : गुरुत्व पदभन्दा श्रेष्ठ अरु केही छैन । जसलाई वेदहरूले नेति-नेति भनेको छ त्यस्ता गुरुत्वलाई मन, वचन र कर्मले सधैं आराधना गर्नु पर्दछ । गुरु नै एक मात्र चिरन्तन (पुरातन) सत्य हुनुहुन्छ जसको वंदना प्रत्येक वेद, उपनिषद्, पुराण तथा समस्त शास्त्रहरूले गरेका छन्। साधकले यथाशक्य प्रयास प्रयत्नबाट गुरुको साधना, आराधना गर्नुपर्छ । शिष्यको कल्याणको एक मात्र भऱ्याङ यही हो जसको फलस्वरूप शिष्यको जीवनमा असम्भव भन्ने केही शेष रहँदैन ।

**देवकिन्नर गंधर्वाः**
**पितरो यक्षचारणाः ।**
**मुनयोऽपि न जानन्ति**
**गुरुशुश्रूषणे विधिम् ॥१०५॥**

भावार्थ : गुरुसेवा अत्यंतै कठीन कार्य हो । देवता, किन्नर, गंधर्व, पितृ, यक्ष, चारण तथा मुनिहरू पनि गुरुसेवाको उपयुक्त विधि थाहा पाउँदैनन् । साधकले आफ्नो सम्पूर्ण तन, मन, धनले उहाँको सेवा गर्ने अवसर प्राप्त गर्नैपर्छ । सेवाले नै गुरुलाई प्रसन्न गर्न सकिन्छ । हुन सक्छ– हाम्रो कुनै सेवा उहाँलाई मन परोस् र उहाँले आफ्नो हृदयसँग लगाएर हामीलाई कृतार्थ गरिदिनुहुनेछ, वर्षौं मंत्र-जप गर्दा पनि प्राप्तिमा शंका रहने कुनै सिद्धि नै प्रदान गरिदिनुहुनेछ ।

**महाहंकार गर्वेण**
**तपोविद्या बलान्विताः ।**
**संसार कुहरावर्ते**
**घटयंत्रे यथा घटाः ॥१०६॥**

भावार्थ : तप, विद्या एवं बलको मिथ्या अहंकारले ग्रस्त जीव घटी यंत्रमा जोडिएको घट समान हो जो जन्म-मृत्युको चक्करबाट छुटकारा नै पाउँदैन । जसरी यंत्रमा जडित घडा कहिले तल पानीमा, कहिले माथि, फेरि तल, फेरि माथि हुँदै गर्छ, त्यस्तै प्रकारले यी अहंकारहरूले ग्रस्त जीव जन्म-मरणको चक्करबाट निस्कनै पाउँदैन। उपरोक्त विद्याहरू निश्चयनै बंधनकारक मानिएका छन् । यी दोष हुँदाहुँदै कहिले पनि कर्म- बंधनबाट छुट्ने सम्भावना रहँदैन ।

जय गुरुदेव !

# श्री निखिलेश्वर शतकम्

आत्मीय पाठकवर्ग, परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य स्वरूपको बारेमा जान्नु र बुझ्नु हामी मनुष्यको वशको कुरा होइन । तैपनि यस स्तम्भमार्फत केही मात्रामा श्री निखिलेश्वर शतकम्लाई क्रमशः प्रकाशित गर्दै लगिएको छ । यस प्रयासबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ भन्ने कुरामा हामी विश्वस्त छौँ ।

॥९१॥

**कामादिदोषनिकरैः प्रहृतं मनो धिक्,**
**सन्मुक्तिमार्गमपहाय चिनोति भोगम् ।**
**मृत्युः प्रनृत्यति दृशोः कलयन् दिनानि;**
**तस्माद् गुरो ! सुशरणं त्वमहं प्रपद्ये ॥**

मलाई यस कुराको राम्ररी ज्ञान छ– काम, क्रोध, लोभ, मोह प्रभृति हृदयस्थ ६ आन्तरिक विकार नै मानिसका वास्तविक शत्रु हुन् र यी अति घातक छन् । आफ्ना यी षड्रिपु (६ शत्रु) हरूमाथि विजय प्राप्त नगरेसम्म जीवनलाई चरितार्थ गर्न एवं मोक्ष पाउन असम्भव छ तापनि म यिनीहरूबाट नै घेरिएको छु । धिक्कार छ यस मनलाई ! जो अझै काम, क्रोधादि दोषहरूबाट अपहृत भएर सद्गति गराउने मुक्ति मार्गलाई छाडेर विषय भोगमा लागिरहेको छ । एक-एक क्षण गरेर दिन गन्ती गर्दै मृत्युतर्फ नृत्य गर्दैछु तर पनि चिरसंचित कर्मदोषका कारण विवश छु । अब अरु कुनै बाटो छैन । तसर्थ हे गुरुदेव ! हजूरका परम आश्रय दिने चरणहरूको शरण परेको छु, हजूरका शरणागतको लाज जोगाएर मेरो उद्धार गरिदिनुहोस् ।

॥९२॥

**क्षिप्तं प्रयाति विषयाननुधावमानं,**
**यल्लप्स्यते कथमनर्हमनः समाधिम् ?**
**वाचा, धिया न वपुषा तपसि प्रतिष्ठा;**
**तन्मे त्वमेव शरणं गुरुदेव ! रक्ष ॥**

हे जीवन मात्रका अन्तर्यामी गुरुदेव ! म के चाहन्छु त्यो हजूरबाट लुकेको छैन र इच्छा कसैको वशमा पनि हुँदैन चाहे त्यो उपहासका भयले सबैका सामु व्यक्त गर्न नसकियोस् । मैले हजूरसँग चरम आध्यात्मिक उत्कर्ष प्राप्तिको सदा याचना गरेको छु । योग र समाधि मेरा प्रिय लक्ष्य हुन् । यस संसार बन्धनबाट मुक्ति पनि चाहन्छु । तर मेरो आचरण यसको ठीक विपरीत छ । मलाई थाहा छ– विषय भोगमा लिप्त मन समाहित हुन सक्दैन । तर त्यसको इच्छा नगरूँ– यो पनि त मेरो वशमा छैन । म के गरुँ ? मेरो चंचल चित्त जो विषय भोगकै पछि लाग्छ, त्यो अयोग्यतावश एकाग्रतामा कसरी समाधि प्राप्त गर्न सक्छ ? मेरो वचन, बुद्धि, शरीर कसैको पनि तपस्यामा प्रतिष्ठा छैन । तसर्थ, हे गुरुदेव ! अब संसार सागरबाट तर्नका लागि हजूरको एक मात्र शरण छ । तसर्थ, मेरो आर्त पुकार सुनेर मेरो रक्षा गर्नुहोस् ।

जय गुरुदेव !

# अपान मुद्रा र अपान वायु मुद्रा

विभिन्न देवीदेवताहरूको ध्यान, साधना गर्दा उहाँहरूलाई मनपर्ने अथवा उहाँसँग सम्बन्धित मुद्राहरूलाई अपनाएर अभ्यास गर्दा छिटोभन्दा छिटो र धेरैभन्दा धेरै कृपा एवं आशीर्वाद प्राप्त गर्न सकिन्छ जस्तै, सूर्य उपासना वा साधना गर्दा सूर्य मुद्रा, भैरव साधना वा ध्यान गर्दा भैरव मुद्रा आदि । हरेक साधनाको आ-आफ्नै नीति-नियम र विधिविधान रहेको हुन्छ भने ती साधनाबाट प्राप्त ऊर्जालाई आफ्नो शरीरका विभिन्न भाग एवं ग्रन्थिहरूमा केन्द्रित गर्नको लागि मुद्राहरूको भूमिका महत्त्वपूर्ण हुने गर्दछ । त्यसैले, मुद्रासहितको ध्यान, साधना वा पूजालाई उत्कृष्ट मानिन्छ । बाहिर रहेको अक्सिजनलाई तानेर हाम्रो शरीरको फोक्सोले शरीरको अशुद्ध रगतलाई शुद्ध बनाई मुटुतर्फ पठाएजस्तै मुद्राले विश्व ब्रह्माण्डमा रहेका दिव्य ऊर्जाहरूलाई शरीरमा तानेर स्थापित गराउँदछ । शरीर र मनमा भएका नराम्रा ऊर्जाहरूलाई हटाएर राम्रा शक्तिहरूलाई प्रवाहित गराउँदै तन, मनलाई सबल र सक्षम बनाउँछ । मुद्रा विभिन्न तरीकाबाट गर्न सकिन्छ । अघिल्ला अंकहरूमा जानकारी गराइँदै आइएका हस्त मुद्राहरूअन्तर्गतका केही मुद्राहरू तल प्रस्तुत छन् ।

**अपान मुद्रा र अपान वायु मुद्रा–**

यी मुद्राहरू देख्दा उस्तै-उस्तै भए पनि फाइदाहरू अलग-अलग र कार्य पनि अलग-अलग छन् । अपान मुद्राले मुख्य प्राणशक्तिमध्ये अपान शक्तिको कार्यलाई सुव्यवस्थित बनाई त्यसको क्षेत्र नाभिदेखि नितम्बसम्मको क्षेत्रलाई सक्रिय बनाउँछ भने अपान वायु मुद्राले शरीरमा भएका अपान वायु अथवा खाएको खाना पाचन हुँदा निस्किएका विकारयुक्त वायुलाई निकाल्ने गर्दछ ।

**अपान मुद्रा विधि–**

ढाडलाई सीधा गरी पद्मासन वा सुखासनमा बस्ने, दुवै हातलाई घुँडामाथि राखी हत्केला आकाशतर्फ फर्काएर राख्ने । यो मुद्रा गर्दा बूढी औँला, माझी औँला, साहिँली औँलाको अगाडिको भाग एक आपसमा छुने र चोरी औँला र कान्छी औँलालाई सीधा राख्ने । यसरी दुवै हातका औँलालाई मिलाई ३०/४० मिनेटसम्म बस्ने ।

**अपान वायु मुद्रा विधि–**

अन्य सम्पूर्ण तरीका अपान मुद्राको जस्तै गरी बस्न सकिन्छ भने हातका औँला चित्रमा देखाएजस्तै गरी कान्छी औँला सीधा राखी साहिँली र माझी औँला बूढी औँलासँग जोड्ने र चोरी औँलाको टुप्पो बूढी औँलाको फेदमा राख्ने ।

यसरी दुवै हातलाई घुँडामाथि राखी ३०/४० मिनेटसम्म अभ्यास गर्न सकिन्छ ।

**फाइदाहरू–**

अपान मुद्राको दैनिक अभ्यासले कब्जियत, ग्याष्ट्रिक, पेटसम्बन्धी रोगहरूलाई बिस्तारै समाप्त पार्दछ । मृगौला, मधुमेह, पिसाबको अवरोध, हर्षा तथा हृदय रोगलाई फाइदा पुऱ्याउँछ । अपान वायु मुद्राको अभ्यासबाट हृदय एवं वाथ रोगहरूलाई हटाउँदछ । जसको मुटु कमजोर छ त्यसको लागि अत्यन्तै लाभकारी मानिन्छ । पेटमा वायु भरिने, डकार आउने समस्यालाई वायु निष्काशन गरी आराम पुऱ्याउँछ । टाउको दुख्ने, दम र उच्च रक्तचापका लागि पनि लाभदायक मानिन्छ । जय गुरुदेव !

अपान वायु मुद्रा

अपान मुद्रा

साबर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री साबर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (साबर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## इतर शक्ति सन्तुलन

इतर शक्ति भन्नाले तल्लो शक्तिलाई बुझ्नुपर्दछ । माथिल्लो सत्तालाई देवसत्ता भन्ने बुझिन्छ भने मानवभन्दा तल खस्केका सूक्ष्मका तल्ला योनिका शक्तिलाई इतर शक्ति भनिन्छ । मनुष्य सत्तामा निकृष्ट कर्म गर्नेहरू, श्रापित हुनेहरू, अगति पर्नेहरू आदि-इत्यादिबाट निर्माण भएको शक्तिलाई इतर शक्तिको रूपमा नामाकरण गरिएको छ । सामान्यतया यिनीहरूलाई सन्तुलनमा राख्न सक्यो भने यिनीहरूबाट पनि धेरै फाइदा लिन सकिन्छ । यिनीहरूको माध्यमबाट पनि उच्चता प्राप्त गर्न सकिन्छ ।

इतर साधना गरी धेरैले यी इतर शक्तिलाई आफ्नो वशमा लिई विभिन्न कार्यहरू गरेको पाइन्छ । कसै कसैले इतर शक्तिलाई प्रयोग गरी कार्य गराउने, अनि देवत्वको फूर्ति लगाउने गर्दछन् । विभिन्न चमत्कारहरू गरेर देखाई दैवी शक्तिको माध्यमबाट गरेको भनी धेरैलाई गुमराहमा राख्दछन्, विभिन्न किसिमका शोषण पनि गरिरहेका हुन्छन् भने अर्कोतिर समाजमा नराम्रो शक्ति खेलाउनेहरूले यही इतर शक्तिलाई आफ्नो वशमा पारी अरुलाई दुःख दिने, अरुको उन्नति, प्रगतिमा बाधा पुऱ्याउने आदि चाहिने-नचाहिने दुःख दिइरहेका हुन्छन् । यही इतर शक्ति हो, कसैले अरुलाई बिगार्न प्रयोग गर्दछन् भने कसैले अरुलाई सुधार्नको लागि प्रयोग गर्दछन् ।

जे होस्, मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले इतर शक्तिलाई सन्तुलनमा राख्न जान्नुपर्दछ । यी इतर शक्तिले जहिले पनि आफ्नो उन्नति, प्रगतिका लागि बाटो हेरिरहेका हुन्छन् । कुनै साधकको तपस्या प्राप्त गर्न सके भने यिनीहरूले उच्चता प्राप्त गर्न सक्छन् । साधनामा विघ्न-बाधा हाली आफ्नो कल्याणको मार्ग यिनीहरूले हेरिरहेका हुन्छन् । त्यसैले पनि आफूले दुःख गरी कमाएको तपस्या नखोसून्, साधनामा अप्ठ्यारो नपारुन् भन्ने आदि-इत्यादि कारणले इतर शक्तिलाई सन्तुलनमा राख्नुपर्दछ ।

इतर शक्तिलाई सन्तुलनमा नराखे साधनामा सफलता प्राप्त गर्न गाह्रो हुन्छ । त्यसैले पनि सन्तुलनमा राख्नु अनिवार्य हुन्छ । कैयौँ अवस्थामा इतर शक्तिलाई कसरी सन्तुलनमा राख्ने भन्ने कुरा हामीलाई थाहा हुँदैन, त्यसैले गुरु मान्नुपर्ने हुन्छ । गुरुलाई सम्पूर्ण जिम्मा लगाउँदा उहाँले नै सूक्ष्म तालमेल मिलाइदिनु भएको हुन्छ । हामीले इतर शक्तिको अस्तित्वलाई कहिल्यै नकार्नु हुँदैन । यिनीहरूले पनि सृष्टिलाई व्यवस्थित पार्न, सृष्टि चक्रलाई सन्तुलनमा राख्न आफ्नै किसिमको भूमिका निर्वाह गरिरहेका हुन्छन् । त्यसैले, सबैको आ-आफ्नै अस्तित्व छ, आ-आफ्नै मर्यादा पनि हुने गर्दछ । यी कुरालाई पनि साधकले बुझ्नुपर्ने हुन्छ ।

इतर शक्तिलाई सन्तुलनमा राख्न विभिन्न प्रक्रियाहरू गरेको पाइन्छ । कसैले बाटेको धूप बाल्छन्, कसैले पहेँलो अक्षता राख्छन्, आफूले खानेकुरा पनि छुट्याउने गर्छन् । कसैले स्थापना नै गरी राखेका हुन्छन् । इतर शक्ति सर्वत्र व्याप्त हुन्छ । हामी देख्छौँ– मन्दिरमा जानेहरूले पनि देवीदेवताको कृपा, आशीर्वाद सहजरूपमा प्राप्त होस् भनी पहिले इतर शक्ति खुशी बनाउन चामल, विभिन्न अन्नहरू मिसाएर मन्दिरमा वरिपरि छर्दै हिँडेका हुन्छन् । जुनसुकै धर्म, संघ, सम्प्रदायमा पनि इतर शक्तिलाई सन्तुलनमा राख्न विभिन्न प्रक्रियाहरू गरिएको छ । इतर शक्तिको अस्तित्वलाई तपाईं-हामीले पनि बुझी सन्तुलनमा राख्ने प्रक्रियामा अगाडि बढौँ, आफ्नो साधनालाई सफल बनाऔँ ।

जय गुरुदेव !

# फेरि आयो महोत्सव

समाजमा विभिन्न किसिमका उत्सव-महोत्सव मनाउने प्रचलन धेरै पहिलेदेखि नै चल्दै आएको छ । विशेष गरेर महोत्सव भन्नासाथ तपाईं-हामीले एउटा रमाइलो चाडपर्व अथवा सबैजना मिलेर गरेको नाचगान अथवा त्यस्तै प्रकारको कार्यक्रम भनेर बुझ्दछौं । वास्तवमा महोत्सव भनेको के हो, उत्सव कसरी महोत्सव बन्दछ भन्ने विषय आफैंमा सोचनीय छ । जुन उत्सव महान् हुन्छ त्यही नै वास्तवमा महोत्सव हो । उत्सवको महानता तब मात्रै सार्थक हुन्छ जब त्यो उत्सवले प्रत्येक व्यक्तिको आत्मालाई झंकृत गर्दछ र आत्मालाई आनन्दको अनुभूति प्रदान गर्दछ । कुनै पनि महोत्सवमा जब व्यक्ति सरीक हुन्छ भने तब ऊ आत्मैदेखि नै आनन्दित हुनुपर्दछ, तब मात्र कुनै पनि उत्सवको सार्थकता रहन्छ अन्यथा नाम मात्रको महोत्सवको कुनै अर्थ र महत्त्व हुँदैन ।

सिद्धाश्रम शक्ति केन्द्रले पनि आफ्ना कतिपय कार्यक्रमहरुलाई महोत्सवको रुपमा मनाउँदै आइरहेको छ । प्रत्येक अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सव, प्रत्येक अप्रिल २१ तारीखलाई परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज यस धर्तीमा आउनुभएको स्मरणमा अवतरण दिवसको रुपमा महोत्सव, विभिन्न मन्त्र हवन साधनाहरुको महोत्सवलाई संस्थाले महोत्सवको रुपमा मनाउँदै आइरहेको छ ।

श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवा लाख रोट अर्पण गर्ने कार्यक्रमको शुभारम्भ चार वर्ष अगाडि अर्थात् २०६१ सालदेखि शुभारम्भ भएको हो । यस चार वर्षको अटुट रोट महोत्सवलाई सफलतापूर्वक संचालन गरेर सिद्धाश्रम शक्ति केन्द्रले सबैलाई आनन्द बाँडेको छ, सबैलाई यस महोत्सवमा सरीक गराएर खुसी बाँडेको छ ।

श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा यही ज्येष्ठ ७ गतेदेखि १७ गतेसम्म पाँचौ रोट महोत्सव आयोजना हुँदैछ । यस महोत्सवमा सहभागी भएर हामीले पुनः फेरि त्यही आनन्द र आल्हादलाई आफ्नो जीवनमा दोहोऱ्याउनु परेको छ, त्यही सुख र समृद्धिलाई जीवनमा उतार्नु छ जुन सुख र समृद्धिलाई अघिल्ला वर्षहरुमा हामीले श्री श्री महायोगी गुरु गोरखनाथको प्रथम प्राकट्यस्थल गोरखाको गोरख गुफा गएर प्राप्त गरेका थियौं ।

अस्तु !